कि ) इलाम

१. **माईस्थानको गणेशमन्दिर** – इलाम नगरपालिकाअन्तर्गत बजारको बीचमा रहेको माईस्थान नजिकै गणेशको मन्दिर अवस्थित छ ।

२. **नारायणस्थानको गणेशमूर्ति** – इलाम बजारमा रहेको नारायणस्थानभित्र काठको खटमा विभिन्न देवीदेवताका मूर्तिका साथै गणेशको मूर्ति पनि रहेको छ ।

की ) झापा

१. **अर्जुनधाराको गणेशमन्दिर** – अर्जुनधारा जलेश्वरधामलाई पूर्वको पशुपतिक्षेत्र मानिएको छ । यहाँका शिव पाञ्चायनका पाँच मन्दिरमध्ये श्रीगणेशको मन्दिर पनि एक हो ।

२. **सुरुङ्गाको गणेशमन्दिर** – झापाअन्तर्गत सुरुङ्गाको देवीपाञ्चायनमन्दिर नजिकै श्रीगणेशमन्दिर पनि रहेको छ ।

३. **भद्रगढीको गणेशमूर्ति** – झापाअन्तर्गत भद्रगढीमा रहेको शिवपाञ्चायनमन्दिरमा श्रीगणेशमूर्तिको पनि प्रतिष्ठा गरिएको छ ।

कु ) संखुवासभा

१. **चैनपुरको सिद्धकाली मन्दिरअन्तर्गतका गणेशमन्दिर र मूर्तिहरू** – चैनपुरको सिद्धकाली गा.वि.स. वडा नं. १ मा रहेको सिद्धकालीमन्दिरको परिसरमा शिलामय गणेशमूर्ति र पित्तलनिर्मित गणेशमूर्ति पनि रहेका छन् । सिद्धकाली–परिसरमा नै छुट्टै गणेशमन्दिर पनि रहेको छ ।

२. **भीरेश्वरगुफाको गणेशस्थान** – संखुवासभा जिल्लाको मनकामना गा.वि.स.अन्तर्गत चैनपुर बजार नजिकै भीरेश्वरगुफा रहेको छ । त्यसभित्र अरू देवताका स्थानहरूका साथै गणेशस्थान पनि रहेको छ । यहाँ रहेको गणेशमूर्तिलाई इन्द्रजात्राको समयमा बजार घुमाउने गरिन्छ ।

३. **पार्वतीगुफाको गणेशमूर्ति** – संखुवासभाको सदरमुकाम खाँदबारीबाट १०० किमि जति उत्तर भागमा रहेको पार्वतीगुफा जाने मार्गमा गणेशमूर्ति पनि रहेको छ ।

४. **गुप्तेश्वरगुफाको गणेशमूर्ति** – संखुवासभाको वाना गा.वि.स.अन्तर्गत पर्ने गुप्तेश्वरगुफाभित्र शिव–पार्वतीका मूर्तिहरूका साथै गणेशमूर्ति पनि रहेको छ ।

५. **मनकामना गा.वि.स.को गणेशमूर्ति** – संखुवासभाको मनकामना गा.वि.स.मा रहेको राधाकृष्ण मन्दिरमा ढलोटको गणेशप्रतिमा स्थापित गरिएको छ ।

कू ) तेह्रथुम

**म्याङलुङको भगवतीमन्दिरको गणेशमूर्ति** – सदरमुकाम म्याङलुङ बजारको बीच भागमा रहेको भगवतीमन्दिरमा श्रीगणेशमूर्ति पनि रहेको छ । यसैगरी जिल्लाका अनेक मन्दिरहरूमा अङ्गमूर्तिका रूपमा गणेशमूर्ति रहेका छन् ।

के ) धनकुटा

१. **मतेश्वर महादेवस्थानको गणेशमूर्ति** – धनकुटा जिल्लाको परेवा गा.वि.स. वडा नं. ८ बोक्रेमा रहेको

मतेश्वर महादेव मन्दिरभित्र गणेशमूर्ति पनि रहेको छ ।

२. **गणेशपाटीको गणेशमूर्ति** – धनकुटा बजारको गणेशपाटीमा गणेशमूर्ति पनि रहेको छ।

३. **ज्ञानमन्दिरको गणेशमूर्ति** – धनकुटा नगरपालिका वडा नं. ५ मदुण्डिखेलको समीपमा रहेको तल्लाकोप्चे भन्ने ठाउँमा ज्ञानमन्दिर रहेको छ । यहाँ धार्मिक प्रवचन गर्ने गरिन्छ । ज्ञानमन्दिर अगाडिको सानो गणेशमन्दिरमा पित्तलको गणेशमूर्ति रहेको छ । )

३५१

( ४. **नरपतेश्वर महादेव मन्दिरको गणेशमूर्ति** – धनकुटा नगरपालिका वडा नं. ७ को हुलाक टोलमा रहेको नरपतेश्वर महादेवमन्दिरमा अन्य देवताहरूका मूर्तिहरूका साथै गणेशमूर्ति पनि रहेको छ ।

## कै ) सुनसरी

१. **दन्तकाली-परिसरको गणेशमन्दिर** – धरानको विजयपुरमा रहेको प्रसिद्ध दन्तकाली मन्दिरको परिसरमा सानो आकारको गणेशमन्दिर रहेको छ ।

२. **पिण्डेश्वरको गणेशमूर्ति** – धरानको पिण्डेश्वर महादेव मन्दिर परिसरमा गणेशको सानो तर सुन्दर मूर्ति रहेको छ ।

## को ) मोरङ

१. **कालिकामन्दिरको गणेशमूर्ति** – विराटनगरको मुख्य बजारको छेउमा रहेको कालिका मन्दिर शक्तिपीठका रूपमा प्रसिद्ध छ । त्यसभित्र अनेक देवीदेवताका मूर्तिहरूका साथै स्थानक मुद्राको पित्तलको गणेशमूर्ति पनि रहेको छ ।

२. **सत्यनारायण मन्दिरको गणेशमूर्ति** – विराटनगरको मुख्य बजार नजिकै अतिथिसदन अगाडि रहेको सत्यनारायणमन्दिरमा सिंहमर्मरनिर्मित गणेशमूर्ति रहेको छ ।

३. **विराटनगरको गणेशमूर्ति** – विराटनगर वडा नं. १४ मा सानो र सुन्दर गणेशमन्दिर रहेको छ ।

## कौ ) भोजपुर

१. **सिद्धकाली-परिसरको गणेशमन्दिर र मूर्ति** – भोजपुरको सिद्धकाली मन्दिर अत्यन्त प्रसिद्ध छ । यस मन्दिरको नजिकमा सुन्दर श्रीगणेशमन्दिर रहेको छ ।

२. **भीमसेनमन्दिरको गणेशमूर्ति** – भोजपुर जिल्लाको आदर्श गा.वि.स. वडा नं. ५ मा रहेको भीमसेन मन्दिरभित्र महाकाल र गणेशका मूर्ति रहेका छन् ।

३. **शिवराम मन्दिर दिङ्लाका गणेशमूर्ति** – आबाल ब्रह्मचारी षडानन्दद्वारा वि.सं. १९५६ मा दिङ्लामा निर्मित शिवराममन्दिरका विभिन्न कोणहरूमा श्रीगणेशका अनेक मूर्ति रहेका छन् ।

## कं ) खोटाङ

१. **सप्तकन्या कालिकास्थानको गणेशमूर्ति** – खोटाङ जिल्लाको लफ्याङ गा.वि.स. वडा नं. ९ को जङ्गलमा रहेको विशेष रूखको फेदलाई नै सप्तकन्या कालिकास्थान भनिन्छ । त्यसमा प्रतीकस्वरूप सात वटा शिला रहेका छन् । तीमध्ये एउटा शिलालाई गणेशमूर्ति मानिएको छ ।

२. **बूढेश्वर महादेवस्थानको गणेशमूर्ति** – लफ्याङ गा.वि.स.मा रहेको प्राकृतिक गुफामा रहेका विभिन्न शिलाहरूमध्ये एउटा शिलालाई बूढेश्वर महादेव मानिएको छ । यसैगरी अर्को शिलालाई गणेश मानी पूजा गर्ने परम्परा रहिआएको छ ।

३. **हलेसी महादेव मन्दिरपरिसरको गणेशमन्दिर** – हलेसी महादेवको तीर्थस्थल सिद्धभूमि मानिन्छ । यसै सिद्धभूमिमा पार्वती र परमेश्वरका प्यारा पुत्र श्रीगणेशको मन्दिर नभएको तथ्यलाई महसुस गरी खोटाङ जिल्लाकै निवासी श्रीमीनबहादुर गुरुङद्वारा गणेशमन्दिर बनाई श्रीगणेशको विशाल प्रतिमा प्रतिष्ठापित गरिएको छ ।

## क: ) सोलुखुम्बु

**बालेश्वरमन्दिरको गणेशमूर्ति** – सोलुखुम्बुको सदरमुकाम सल्लेरीबाट १७ किमि दक्षिण-पश्चिममा रहेको बालेश्वरमन्दिर-परिसरमा श्रीगणेशमूर्ति पनि रहेको छ । यस जिल्लामा रहेका अन्य मन्दिरहरूमा श्रीगणेशका मूर्ति रहेका छन् ।

## ख ) ओखलढुङ्गा

१. **नर्मदेश्वरमन्दिर-परिसरका गणेशमूर्ति र मन्दिर** – ओखलढुङ्गाको नर्मदेश्वर गा.वि.स. वडा नं. २ लिखे खोलाको किनारमा रहेको कुवावेंसी भन्ने ठाउँमा नर्मदेश्वर महादेवमन्दिर रहेको छ । यस मन्दिरभित्र अरू देवताका साथै गणेशमूर्ति पनि रहेको छ । यस मन्दिरको बाहिरपट्टि छुट्टै गणेशमन्दिर पनि छ।

२. **ओखलढुङ्गाको गणेशमन्दिर** – ओखलढुङ्गा गा.वि.स. वडा नं. ६ मा रहेको बजारमा गणेशमन्दिर अवस्थित छ । प्यागोडा शैलीको दुइतले यस मन्दिरमा गणेशको प्रतीकस्वरूप प्राकृतिक शिला रहेको छ । त्यसलाई नै गणेश मानी पूजा गर्ने गरिन्छ ।

## खा ) उदयपुर

१. **देवी-गणेशमन्दिर** – उदयपुरअन्तर्गत त्रियुगा नगरपालिकाको महत्त्वपूर्ण मन्दिरका रूपमा देवी-गणेशमन्दिर प्रसिद्ध छ ।

२. **उदयपुर गाईघाटको गणेशमन्दिर** – उदयपुरअन्तर्गत गाईघाटमा उदयपुर जिल्लाको एउटा प्रसिद्ध मन्दिरको रूपमा गणेशमन्दिर रहेको छ ।

## खि ) सप्तरी

१. **कङ्कालिनीमन्दिरको गणेशमूर्ति** – सप्तरी जिल्लाको भारदाह गा.वि.स.अन्तर्गत कोशी नदीको पश्चिमी किनारमा रहेको कङ्कालिनीमन्दिरको परिसरमा श्रीगणेशमूर्ति पनि रहेको छ ।

२. **लक्ष्मीनारायण मन्दिरको गणेशमूर्ति** – सप्तरी जिल्लाको मौबाहा गा.वि.स.अन्तर्गत मौबाहा गाउँमा लक्ष्मीनारायण मन्दिर रहेको छ । विक्रम संवत् १९०१ मा जङ्गबहादुरको सेनाका कप्तान शङ्करदत्त झाद्वारा स्थापित यस मन्दिरमा लक्ष्मीनारायणको मूल मूर्तिका साथ श्रीगणेशमूर्ति पनि रहेको छ ।

३. **भजनेश्वर महादेवमन्दिरको गणेशको नृत्यमूर्ति** – सप्तरी जिल्लाको कञ्चनपुरबाट उत्तरतर्फ घोघनेश्वर गा.वि.स. वडा नं. १ मा भजनेश्वर महादेवको मन्दिर रहेको छ । भजना चौधरीले खेत खन्दा प्राप्त गरेको शिव-पार्वतीको मूर्ति भजनेश्वर महादेवको नामबाट प्रसिद्ध छ । यस मन्दिरमा गणेशको नृत्यमूर्ति प्रतिष्ठापित छ ।

४. **हरिनन्देश्वर-महादेवमन्दिर-परिसरको गणेशमन्दिर** – राजविराज नगरपालिका वडा नं. १ मा पञ्चमुखी महादेवको मन्दिर रहेको छ । यसलाई हरिनन्देश्वर महादेवको मन्दिर भनिन्छ । यसको समीपमा नै श्रीगणेशमन्दिर पनि रहेको छ ।

## खी ) सिराहा

सिराहा जिल्लामा छुट्टै गणेशका मन्दिर रहेका छैनन् । तर ठाउँ ठाउँमा रहेका महादेवमन्दिर,, लक्ष्मीनारायणमन्दिर र देवीमन्दिरहरूभित्र गणेशका मूर्तिहरू भेटिन्छन् ।

## खु ) दोलखा

**कालिञ्चोक माईस्थानको गणेशमूर्ति** – दोलखा बजारबाट ९ कि.मि. टाढा सुप्पा गाउँमा कालिञ्चोक माईको मन्दिर छ । पर्वतको टाकुरामा रहेको यस स्थानमा एउटा कुण्ड छ । त्यसै कुण्डलाई कालिञ्चोक माई मानेर पूजा गरिन्छ । त्यस कुण्डमा अन्य देवताका मूर्तिका साथै गणेशमूर्ति पनि रहेको छ । दोलखा जिल्लाका अनेक देवीदेवताका मन्दिरहरूमा गणेशमूर्ति पनि पाइन्छन् ।

## खू ) रामेछाप

**खाँडादेवीस्थानको गणेशमन्दिर** – खाँडादेवी गा.वि.स.को वडा नं. ७ मा प्यागोडा शैलीको खडादेवीको मन्दिर रहेको छ । त्यसभित्र देवीको प्रतीकस्वरूप त्रिशूल र घण्टा रहेका छन् । मन्दिर परिसरमा अन्य मन्दिरका साथै गणेशमन्दिर पनि रहेको छ । रामेछाप जिल्लाका अनेक देवीदेवताका मन्दिरहरूमा गणेशमूर्ति पनि पाइन्छन्।

## खे ) सिन्धुली

१. **दुम्जा कुशेश्वर महादेवस्थानको गणेशमूर्ति** – दुम्जा गा.वि.स.को वडा नं. १ रोशी खोला र कोशी खोलाको दोभानमा कुशेश्वर महादेवमन्दिर रहेको छ । मन्दिरमा प्राकृतिक शिलाको शिवलिङ्ग छ । मन्दिरका चार सुरमा नारायण, भगवती र सूर्यका साथै गणेशमूर्ति रहेको छ ।

२. **झाँगाझोलीको गणेशमूर्ति** – झाँगाझोली गा.वि.स. वडा नं. १ मा खुला स्थानमा वरको वृक्षमुनि प्राकृतिक गणेशमूर्ति रहेको छ । यहाँ शनिवार र मङ्गलवार दर्शनार्थीहरूको घुइँचो लाग्दछ ।

## खै ) धनुषा

१. **जनकमन्दिरको गणेशमूर्ति** – जनकपुरमा रहेको जनकमन्दिरमा ३६५ शालिग्राम र जनकपरिवारका मूर्तिहरूका साथै श्रीगणेशमूर्ति पनि रहेको छ ।

२. **उदयेश्वर महादेव मन्दिरको गणेशमूर्ति** – धनुषा जिल्लाअन्तर्गत घनौजी गा.वि.स. वडा नं. ५ मा उदयेश्वर महादेवमन्दिर रहेको छ । त्यहाँ शिवको मूलमूर्तिका साथै सूर्य, विष्णु, दुर्गा र गणेशका मूर्ति पनि रहेका छन् ।

३. **स्वर्णशिखर राममन्दिरको गणेशमूर्ति** – जनकपुरमा रहेको स्वर्णशिखरसम्पन्न राममन्दिर देश-विदेशमा प्रसिद्ध छ । यसै राममन्दिरको बाहिरपट्टि श्रीगणेशको सिद्धप्रतिमा रहेको छ ।

४. **फूलहरको गणेशमूर्ति** – जनकपुरदेखि करीब १५ कि.मि. दक्षिणतर्फ रहेको फूलहरनामक पौराणिक स्थानमा गणेशमन्दिर रहेको छ ।

## खो ) महोत्तरी

१. **जलेश्वरको गणेशमन्दिर** – जलेश्वर बजारको बीचभागमा रहेको जलेश्वर महादेवमन्दिरको दक्षिणतर्फ छुट्टै गणेशमन्दिर रहेको छ ।

२. **सोनामाईको गणेशमूर्ति** – सोनामाई गा.वि.स. वडा नं. ५ मा रहेको सोनामाई स्थानमा अरू देवी-देवताका मूर्तिहरूका साथै गणेशमूर्ति पनि रहेको छ ।

३. **रतवा मठको गणेशमूर्ति** – महोत्तरी जिल्लाको रतवा मठमा विष्णुमन्दिर रहेको छ । त्यसमा राधा-कृष्ण र गणेशका शिला एवं मूर्ति रहेका छन् ।

## खौ ) सर्लाही

सर्लाहीका विभिन्न शिवमन्दिर, विष्णुमन्दिर एवं शक्तिमन्दिरहरूमा अङ्गदेवताका रूपमा श्रीगणेशका मूर्तिहरू पनि रहेका छन् ।

## खं ) सिन्धुपाल्चोक

१. **चौताराको गणेशमन्दिर** – सिन्धुपाल्चोक जिल्लाको सदरमुकाम चौतारा बजारमा रहेको श्रीकृष्णमन्दिरको छेउमा छुट्टै सुन्दर गणेशमन्दिर रहेको छ ।

२. **भीमसेनस्थानको गणेशमूर्ति** – नवलपुर गा.वि.स. वडा नं. ७ को पारङ्खोर टोलमा रहेको भीमसेन मन्दिरभित्र गणेशका केही मूर्ति रहेका छन् ।

३. **फुल्पिङसेराको गणेशमन्दिर** – सिन्धुपाल्चोक जिल्लाको फुल्पिङसेरा नामक स्थानमा प्राचीन गणेशमन्दिर रहेको छ ।

४. **सिन्धुपाल्चोकको गणेशकुण्ड** – सिन्धुपाल्चोक जिल्लामा सरस्वतीकुण्ड, इन्द्रकुण्ड, नौलिङ्गकुण्ड र बगामकुण्ड रहेजस्तै गणेशको नामबाट गणेशकुण्ड पनि रहेको छ ।

## खः ) काभ्रेपलाञ्चोक

१. **धूलिखेलको गणेशमन्दिर** – धूलिखेल बजारमा सुन्दर श्रीगणेशमन्दिर रहेको छ । प्रत्येक मङ्गलवार र माघ महिनामा त्यहाँ दर्शनार्थीहरूको भीड लाग्ने गर्छ ।

२. **गोखुरेश्वर महादेवमन्दिरको गणेशमूर्ति** – धूलिखेल बजारको पूर्वतर्फ डाँडाको बीच फेदीमा गोखुरेश्वर महादेवको मन्दिर रहेको छ । त्यसभित्र अरू देवताका मूर्तिहरूका साथै श्रीगणेशमूर्ति पनि रहेको छ ।

३. **बनेपाको द्वारगणेशमूर्ति** – बनेपा नगरपालिकाभित्र पर्ने मूलढोकाको तोरणमा श्रीगणेशमूर्ति कुँदिएको छ ।

४. **भोलखा टोलको गणेशमन्दिर** – बनेपाको भोलखा टोलमा राजा हरिसिंहले सिम्रौनगढबाट ल्याएको गणेशमूर्तिलाई स्थापना गरी निर्माण गरिएको श्रीगणेशमन्दिर रहेको छ ।

५. **त्रिवेणीघाटको गणेशमूर्ति** – पनौतीको रोशी र पुण्यमाता खोलाको सङ्गमलाई शचीतीर्थ अथवा त्रिवेणीघाट पनि भनिन्छ । त्यहाँ राममन्दिरकै छेउमा श्रीगणेशमूर्ति रहेको छ ।

६. **पलाञ्चोक भगवतीमन्दिरको गणेशमूर्ति** – पाँचखालदेखि सात कि.मि. उचाइमा पर्वतको डाँडामा रहेको पलाञ्चोक भगवतीको मन्दिर निकै प्राचीन मन्दिरका रूपमा विख्यात छ । त्यहाँ भगवतीमूर्तिको उत्तरतर्फ

गणेशमूर्ति स्थापना गरिएको छ ।

७. **उग्रतारामन्दिर-परिसरको गणेशमन्दिर** – नाला गा.वि.स. वडा नं. ४ लगनटोलमा रहेको उग्रतारामन्दिरको परिसरमा गणेशमन्दिर पनि रहेको छ ।

८. **नालाको गणेशमन्दिर** – नालाको इपाटोलमा सानो तर भव्य गणेशमन्दिर रहेको छ ।

९. **साँगाको गणेशमन्दिर** – साँगा गा.वि.स.को ढुङ्गेधारा नजिकै श्रीगणेशमन्दिर रहेको छ ।

१०. **साँगाको सिद्धिविनायकमन्दिर** – साँगा गा.वि.स. वडा नं. ४ मा सुन्दर एवं कलात्मक सिद्धिविनायकमन्दिर रहेको छ । यस मन्दिरमा लक्ष्मीनारायण, अर्धनारीश्वर उमामहेश्वर एवं भीमसेनका मूर्तिहरूका साथै श्रीगणेशका साना-साना मूर्ति पनि रहेका छन् ।

११. **जगन्नाथदेवलको गणेशमूर्ति** – साँगा गा.वि.स. वडा नं. ४ मा रहेको जगन्नाथ देवलमा अन्य देवी-देवताका मूर्तिहरूका साथै श्रीगणेश र रक्तगणेशका मूर्तिहरू पनि रहेका छन् ।

१२. **नासिकास्थानको गणेशदेवल र गणेशपोखरी** – नासिकास्थान गा.वि.स. वडा नं. ६ मा नासिका देवीको स्थान रहेको छ । त्यसको पश्चिमतर्फ गणेशमन्दिर र गणेशपोखरी रहेका छन् ।

१३. **नारायणमन्दिरको गणेशमूर्ति** – नासिकास्थान गा.वि.स.को वडा नं. ५ मा रहेको नारायणस्थानको नारायणमूर्तिको दायाँ भागमा गणेशमूर्ति रहेको छ ।

१४. **कुशादेवीको गणेशमन्दिर** – कुशादेवी नामक स्थानमा प्राचीन गणेशमन्दिर रहेको छ । पनौती अथवा लुभु लामाटार भएर त्यहाँ जान सकिन्छ ।

१५. **चलालको गणेशस्थान** – काभ्रेपलाञ्चोक जिल्लाको चलाल नामक स्थानमा गणेशस्थान रहेको छ ।

१६. **बनेपा बजारको गणेशमूर्ति** – सोह्रौं शताब्दीताका निर्माण गरिएको अहिले भग्न अवस्थामा रहेको एउटा गणेशमूर्ति बनेपा बजारमा रहेको छ ।

१७. **बनेपाको गणेशमन्दिर** – बनेपा बजारको मध्य भागमा प्राचीन गणेशमन्दिर रहेको छ । उक्त गणेशमन्दिरको तोरणमा पनि गणेशको मूर्ति कुँदिएको छ ।

## ग) नुवाकोट

नुवाकोटको चतुराल गा.वि.स.मा रहेको गणेशमन्दिर जगात गणेशमन्दिरको नामबाट प्रसिद्ध छ । यहाँको गणेशमूर्ति आफ्नो वाहन छुचुन्द्रोमाथि सवार छ ।

## गा) रसुवा

१. **लौरीविनायक गणेशमन्दिर** – रसुवाको प्रसिद्ध स्थान लौरीविनायकमा भगवान् विनायकको मन्दिर रहेको छ।

२. **रसुवागढीको गणेशमन्दिर** – रसुवागढीमा देवीको मन्दिर सँगसँगै गणेशमन्दिर पनि रहेको छ । त्यस मन्दिरभित्र त्यहीँको बगरबाट ल्याई स्थापना गरिएको गणेशमूर्ति रहेको छ ।

## गि) धादिङ

१. **गुप्तेश्वर गुफाको गणेशमूर्ति** – धादिङ जिल्लाको सदरमुकाम धादिङबेसीबाट तीनघण्टा पैदल यात्रा गरेपछि पुगिने गुप्तेश्वरगुफाको धार्मिक महत्त्व रहेको छ । यस गुफाका मूल देवता महादेव हुन् । त्यहाँ रहेका

अनेक आकृतिमध्ये एउटा आकृति गणेशको पनि छ ।

२. **भीमसेनमन्दिरको गणेशमूर्ति – मैदी गा.वि.स.** वडा नं. ३ ऊँखुबारीमा रहेको भीमसेनमन्दिरमा अनेक देवी–देवताहरूका मूर्तिका साथै गणेशमूर्ति पनि रहेको छ ।

३. **धार्केका कार्यविनायक** – धादिङ जिल्लाको महादेवबेँसी नजिकै धार्केमा कार्यविनायकको मन्दिर रहेको छ।

४. **गजुरीको गणेशमन्दिर** – धादिङ जिल्लाको गजुरी बजारमा सानो तर सुन्दर गणेशमन्दिर रहेको छ । /

## गी ) काठमाडौं

१. **अशोकविनायकमन्दिर** – अशोकविनायक काठमाडौं उपत्यकाका चार विनायक एवं आठ विनायकभित्र पर्दछन् । अशोकविनायकको मन्दिर काष्ठमण्डप मन्दिरअगाडि मरुटोलमा पर्दछ । यस मन्दिरको अशोकविनायकको मूर्ति आसनमुद्रामा रहेको छ ।

२. **काष्ठमण्डपका चार सुरका गणेश** – काष्ठमण्डप एउटै रूखका काठबाट बनाइएको हो भन्ने विश्वास गरिन्छ । यसको अर्को नाम मरुसत्तल हो । यसका चार सुरका चार खाँबामा अशोकविनायक, सूर्यविनायक, जलविनायक र कार्यविनायकका मूर्ति कुँदिएका छन् ।

३. **तलेजुभवानीको गणेशमूर्ति** – काठमाडौं हनुमानढोका–परिसरमा रहेको तलेजुभवानी मन्दिरका छेउ–छेउमा अन्य देवी–देवताका मूर्तिहरूका साथै गणेशमूर्ति पनि रहेको छ ।

४. **असनको गणेशमन्दिर** – असनको अन्नपूर्णामन्दिर–परिसरमा उत्तरतर्फ दुई छत भएको गणेशमन्दिर छ । त्यसमा गणेशको विशाल प्रतिमा रहेको छ ।

५. **कमलाक्षी गणेशमूर्ति** – कमलाक्षीमा हाल रानीपोखरी राष्ट्रिय नाचघरबाट असनतिर जाँदा सडकको देब्रेतिर पर्खालमा अड्याएर राखिएको एक गणेशमूर्ति रहेको छ । यस मूर्तिमा बलि नचढ्ने हुँदा शाकाहारी भक्तहरूले यहाँ आएर श्रीगणेशको पूजा–आराधना गर्दछन् ।

५. **चिकंअटको श्वेतगणेशमन्दिर – काठमाडौं** अन्नपूर्णामन्दिरदेखि दक्षिणतर्फ चिकंअटमा सेता गणेशमन्दिर रहेको छ । यसमा रहेका गणेशलाई श्वेतगणेश भनी पूजा गर्ने परम्परा रहिआएको छ । अर्धपर्यङ्कासनमा रहेको श्वेतगणेशका मूर्तिका चार हात, तीन आँखा छन् । यस मन्दिरमा रहेको गणेशमूर्तिको टाउकोमा मुकुटको आकार रहेको छ । मूर्ति सुन्दर र स्पष्ट छ ।

६. **इन्द्रायणीको गणेशमूर्ति** – क्षेत्रपाटी धोबीधारादेखि पश्चिम विष्णुमतीको तटमा इन्द्रायणीमन्दिर रहेको छ। यस मन्दिरभित्र मनकामना, वाराही, चामुण्डा, महालक्ष्मी, मनमैजु, व्याघ्रिणी, सिंहिनी, ब्रह्मायणी, वैष्णवी र कुमारीका मूर्तिहरूका साथै गणेशमूर्ति पनि रहेको छ ।

७. **भद्रकालीमन्दिरको गणेशमूर्ति** – काठमाडौं शहीदगेटअगाडि सिंहदरबार जाने बाटोमा भद्रकालीको मन्दिर रहेको छ । खुला आकाशमा रहेको यस मन्दिरको उत्तरतर्फको भित्तामा सिंहिनी, कुमार, भैरव, विष्णु र कुमारीका मूर्तिहरूका साथै गणेशको मूर्ति पनि रहेको छ । मन्दिरपरिसरमा छिर्नासाथ गुम्बज आकारको मन्दिरभित्र एक ठूलो भूँडे चतुर्भुज गणेशमूर्ति पनि रहेको छ । दर्शनार्थीहरू भद्रकालीपरिसरमा पुग्नासाथ सर्वप्रथम भूँडे गणेशको परिक्रमा गरी देवीको दर्शन गर्दछन् ।

८. **रानीपोखरीको सोहहाते कालागणेशको मन्दिर** – रानीपोखरीको ऐशान्यकुनामा भैरव, आग्नेय कुनामा

महालक्ष्मी, नैर्ऋत्य कुनामा सोह्र हाते भुँडे गणेश र वायव्य कुनामा भैरवका मन्दिर रहेका छन् । यी गणेशलाई काला गणेश पनि भन्ने गर्दछन् ।

९. **सुन्धाराको गणेशमूर्ति** – प्रसिद्ध **सुन्धारा** धराहराको फेंदीमा पर्दछ । यस धाराको निर्माण त्रिपुरासुन्दरीबाट भएको हुँदा यसको प्राचीन नाम त्रिपुरधारा हो । यस धाराको भित्तामा गणेश, सूर्य र गङ्गाको मूर्तिसमेत भएकाले यहाँका तीन धारालाई गङ्गा, यमुना र सरस्वतीको प्रतीक मानिएको छ ।

१०. **पशुपतिनाथ परिसरका गणेशमन्दिर र मूर्तिहरू** – नेपालको प्रसिद्ध पशुपतिनाथमन्दिरको उत्तरतर्फ ब्रह्मा, शिव–पार्वती, विष्णु र कुमारका मूर्तिहरूका साथै गणेशमूर्ति पनि रहेको छ । आर्यघाटको अलिकति दक्षिणतर्फ पुलकै मुखमा पञ्चगणेशको मन्दिर रहेको छ । यज्ञेश्वर शिवलिङ्गको परिक्रमा गर्दै त्यहाँबाट बाहिर निस्कँदा भित्तामा दक्षिणकाली, नवदुर्गा र भैरवको मूर्तिका साथै गणेशको मूर्ति पनि कुँदिएको देख्न सकिन्छ। पशुपति मन्दिरको गर्भगृहमा लालगणेशको दुर्लभ मूर्ति रहेको छ । पूजारीबाहेक अरू कसैको दृष्टि नपर्नाले त्यति प्रसिद्ध नभए तापनि लालगणेश भगवान् पशुपतिसरह नै प्रभावकारी, सद्यफलदाता र विघ्नहर्ता मानिएका छन् । पशुपति मन्दिरको दक्षिणतर्फ सिनामङ्गलमा भगवान् पशुपतिनाथसँग सम्बद्ध सिद्धिविनायकको मन्दिर रहेको छ ।

प्राचीन राजा शिवदेवले देउपाटनमा नौ टोल बनाई अनेक देवी–देवताको स्थापना गर्दा प्रत्येक टोलमा एक–एक गणेशमूर्तिको स्थापना गरेको विषय वंशावलीहरूमा प्रकाश पारिएको छ । उनैले देउपाटनको पश्चिमी भेगमा पनि चार वटा गणेशमूर्तिको स्थापना गरेको उल्लेख गरिएको छ । प्राचीन राजा शिवदेवले पशुपति वनकालीको स्थापना गरेपछि त्रिनेत्र र विशालकाय मूर्ति बनाई वनकालीमन्दिर र वर्तमान वनकाली धर्मशालाको बीचमा वचनविनायकको मन्दिर बनाई मूर्ति प्रतिष्ठा गरेको कुरा भाषा वंशावली भाग – एकमा उल्लेख गरिएको छ ।

११. **गोरखनाथमन्दिर-परिसरको गणेशमूर्ति** – गोरखनाथमन्दिर–परिसरमा विभिन्न शिखरशैलीका बद्रीनाथ, केदारनाथ आदि देवताहरूका पन्ध्रवटा जति मन्दिर रहेका छन् । गोरखनाथबाट राममन्दिर र पशुपतिनाथ जाने ओरालाको मुखमा नै गणेशको मूर्ति रहेको छ ।

१२. **जयवागीश्वरी मन्दिरको गणेशमूर्ति** – पशुपतिनाथको मन्दिरबाट पश्चिम गौशालाबाट चाबहिल जाने बाटाको बीचमा जयवागीश्वरी सरस्वतीमूर्ति रहेको छ । त्यहाँ गणेशको अनौठो मूर्ति छ, किनकि त्यस मूर्तिमा हात्तीको शिर छैन । तसर्थ यो मूर्ति गणेशको अवतरणसम्बन्धी पौराणिक कथाहरूभन्दा पहिले वैदिक कालसँग सम्बद्ध छ भन्न सकिन्छ ।

१३. **विरूपाक्षको गणेशमूर्ति** – वाग्मती नदीको किनार आर्यघाटमा किरातकालीन विरूपाक्षको मूर्ति रहेको छ। त्यस मूर्तिका अगल–बगलमा मृगेश्वर र कालिकाका मूर्तिहरूका साथै गणेशमूर्ति पनि रहेको छ ।

१४. **चन्द्रविनायकमन्दिर** – चाबहिल चोकबाट दक्षिण–पश्चिमको एक सानो चोकमा चन्द्रविनायकमन्दिर रहेको छ । त्यसको माथिल्लो छानामा सुनको मोलम्बा लगाइएको छ । दुइतले पित्तलको छाना भएको प्यागोडाशैलीको चन्द्रविनायकमन्दिरभित्र दुइहाते नागासनमा आसीन गणेशको सानो कालो वर्णको पाषाणमूर्ति रहेको छ । चन्द्रविनायकलाई चाबेलगणेश, ह्वोशलागणेश, रक्तविनायक र श्वेतविनायक पनि भनिन्छ ।

१५. **नीलसरस्वतीमन्दिर लाजिम्पाटको गणेशमूर्ति** – काठमाडौंको लाजिम्पाटदेखि पूर्वतर्फ गैरीधारामा नीलसरस्वतीमन्दिर रहेको छ । नीलसरस्वती मूर्तिको बायाँपट्टि पादपीठमा श्रीगणेशमूर्ति कुँदिएको छ ।

१५. **ईचङ्गुनारायणको गणेशमूर्ति** – काठमाडौं स्वयम्भूबाट करीब ३ किमि पश्चिमतर्फ सानो पर्वतको फेंदीमा ईचङ्गुनारायणमन्दिर रहेको छ । उपत्यकाका चार नारायणमध्येका एक नारायण ईचङ्गुनारायण मानिएका छन् । ईचङ्गुनारायणमन्दिरमा प्रवेश गर्नुभन्दा पहिले भित्तामा श्रीगणेशमूर्ति कुँदिएको देख्न सकिन्छ ।

१६. **दक्षिणकालीको गणेशमूर्ति** – काठमाडौं रत्नपार्कबाट १८ कि.मि. दक्षिणतर्फ फर्पिङ बजार नजिकै पूर्णावती गङ्गा र उद्धारवती गङ्गाको सङ्गमस्थलमा दक्षिणकालीमन्दिर रहेको छ । दक्षिणकालीमन्दिरमा रहेका मूर्तिको उत्तरतर्फ वारुणी र गणेशका मूर्ति रहेका छन् भने दक्षिणतर्फको भित्तामा सप्तमातृका, कुमार र भैरवका मूर्तिहरूका साथै गणेशमूर्ति पनि रहेको छ ।

१७. **मत्स्यनारायण मन्दिरको गणेशमूर्ति** – कीर्तिपुरबाट करीब ४ कि.मि. दक्षिणतर्फ पर्ने मच्छेगाउँमा मच्छेनारायणमन्दिर रहेको छ । यस मन्दिरका वरपर सरस्वती, महादेव र हनुमान्का मूर्तिहरूका साथै गणेशमूर्ति पनि रहेको छ ।

१८. **जलविनायक मन्दिर चोभार** – काठमाडौंदेखि दक्षिणतर्फ दक्षिणकाली जाने मूल बाटाको बीचमा हिमाल सिमेन्ट कारखाना नजिकै वाग्मतीको किनारमा प्रसिद्ध जलविनायकमन्दिर रहेको छ । यी जलविनायक चार विनायकमध्येका एक मानिन्छन् ।

१९. **मातातीर्थको गणेशमूर्ति** – ऐतिहासिक एवं धार्मिक तीर्थ मातातीर्थ महादेवस्थान गा.वि.स. वडा नं. ३ अन्तर्गत चन्द्रागिरि पर्वतमालाको फेंदीमा पर्दछ । यहाँ मल्लकालीन शिवलिङ्ग रहेको छ । यसलाई चन्द्रेश्वर महादेव भनिन्छ । यहाँ शिवलिङ्ग नजिकै सुन्दर तोरण भएको गणेशमन्दिर रहेको छ ।

२०. **बूढानीलकण्ठको गणेशमन्दिर** – शिवपुरी पहाडको फेंदीमा रहेको बूढानीलकण्ठ मन्दिर-परिसरमा पश्चिमतर्फ एउटा गणेशमन्दिर रहेको छ ।

२१. **महामाया बगलामुखी मन्दिरको गणेशदेवल** – काठमाडौं सहरबाट उत्तरपूर्व कपन गा.वि.स.मा महामाया बगलामुखीको भव्य मन्दिर रहेको छ । यस मन्दिरको परिसरमा सिद्धिगणेशको देवल रहेको छ ।

२२. **आदेश्वर महादेवको गणेशमूर्ति** – सीतापाइला गा.वि.स. वडा नं. ५ आदेश्वरमा आदेश्वर महादेवमन्दिर छ। यस मन्दिरभित्र दायाँ-बायाँ गणेशका अनेक मूर्तिहरू रहेका छन् । मन्दिरभित्र पस्ने ढोकाको दायाँ-बायाँ भित्तामा पनि गणेश र कुमारका मूर्ति रहेका छन् ।

२३. **रुद्रेश्वर मन्दिरको गणेशमूर्ति** – काठमाडौंबाट १० कि.मि. उत्तर गोलढुङ्गा गा.वि.स.अन्तर्गत नागार्जुन पहाडमा रुद्रेश्वर महादेवमन्दिर रहेको छ । रुद्रेश्वर लिङ्गको बायाँ भागमा सरस्वतीका मूर्तिहरूका साथै गणेशमूर्ति पनि रहेको छ ।

२४. **कमलादी गणेशमन्दिर** – कमलादीमा रहेको प्राचीन गणेशमन्दिर घण्टाघरदेखि पूर्वतर्फ पर्दछ । कमलादी गणेशलाई काठमाडौंका प्रसिद्ध गणेशमध्येका एक गणेश मानिन्छ । यी गणेशलाई श्वेतगणेश पनि भनिन्छ ।

२५. **इन्द्रदहतीर्थमा रहेको गणेशमूर्ति** – काठमाडौंको पश्चिमी भेग चन्द्रागिरिको पूर्वपट्टि वायव्यकोणमा दहचोक गा.वि.स. वडा नं. ६ अन्तर्गत इन्द्रदहतीर्थ रहेको छ । यहाँ अनेक मन्दिरहरू रहेका छन् । दक्षिणतर्फको बाहिरी गाह्रोको भित्तामा गणेशमूर्ति रहेको छ ।

२६. **पिङ्गलास्थानको गणेशमूर्ति** – पशुपतिक्षेत्रको दक्षिणपट्टिको सीमानामा प्राचीन पिङ्गलास्थान रहेको छ । त्यहाँ करीब ३५ से.मि. उचाइको भग्न गणेशमूर्ति रहेको छ । यस मूर्तिको बनोट र शैलीबाट हेर्दा यो मूर्ति

नेपालको प्राचीन गणेशमूर्ति हो भन्न सकिन्छ ।

२७. **गैरीधारा, देवपाटन, ज्ञानेश्वर र साँखुका प्राचीन गणेशमूर्तिहरू** - उक्त स्थानहरूका गणेशमूर्ति साधारण र सरल भावभङ्गीमा छन् । मुकुटविहीन यी गणेशमूर्तिहरू ईशाको चौथो शताब्दीदेखि छैटौं शताब्दीभित्र स्थापित हुन सक्छन् । यस्ता दुइहाते गणेशमूर्तिहरू भारतको उदयगिरि गुफामा प्राप्त भएका छन्। यी मूर्तिहरूमा यज्ञोपवीतका रूपमा कलात्मक सर्प देब्रेबाट दाहिनेतिर काँधमा लगाएको देखिन्छ ।

२८. **धूमवाराहीका धनविनायक** - धूमवाराहीको धनविनायकमन्दिरमा रहेको गणेशमूर्ति धेरै भग्न भएकाले यस मूर्तिमा के के आभूषण र आयुधहरू थिए भन्न सकिंदैन । आयताकार आसनमाथि धनविनायकमूर्ति कुँदिएको छ ।

२९. **यङ्गालटोलको गणेशमूर्ति** - यङ्गालटोलको गणेशमूर्ति चारहाते, मुकुटरहित र अर्धगोलाकार छ । कालक्रमले खिइसकेको भएतापनि यस मूर्तिको पेटमा यज्ञोपवीतको चिह्न देखिन्छ । यो मूर्ति आठौं शताब्दीताकाको मानिएको छ ।

३०. **चाँगुनारायण-छिन्नमस्ताको गणेशमूर्ति** - चाँगुनारायणस्थित छिन्नमस्तामन्दिरको पूर्वी भित्तामा प्राचीन गणेशमूर्ति रहेको छ । अर्धपर्यङ्कासनमा बसेको यस गणेशमूर्तिमा चार हात रहेका छन् ।

३१. **कमलाक्षी षड्भुज गणेशमूर्ति** - कमलाक्षीमा षड्भुज गणेशको मूर्ति रहेको छ । बीसौं शताब्दीमा स्थापित यो मूर्ति सर्पासनमा रहेको छ । अर्धचन्द्रद्वारा सुसज्जित मुकुट छ । नागासनमुनि स्थानक अवस्थामा मुसो रहेको छ । टाउकोमा नागका सात फणा रहेका छन् । मूर्तिको पादपीठमा ॐ जय सर्वसिद्धि विनायक लेखिएको छ ।

३१. **राष्ट्रिय-सङ्ग्रहालय छाउनीमा रहेको गणेशमूर्ति** - राष्ट्रिय-सङ्ग्रहालय छाउनीमा एक कालो ढुङ्गाको करीब ४२ इञ्च लम्बाइ भएको फलक रहेको छ । फलकको माथिल्लो भागमा दुई हात भएकी देवीलाई कमलमाथि सुखासनमा बसेको अवस्थामा उत्कीर्ण गरिएको छ । देवीको ठीक मुन्तिर तल्लो भागमा अर्धपर्यङ्कासनमा गणेशमूर्ति रहेको छ । चारहाते यस मूर्तिको शिरमा अर्धाकार मुकुट छ ।

३२. **जयवागीश्वरी नजिकैको गणेशमन्दिर** - जयवागीश्वरी मूल सडकको पूर्वपट्टि एउटा सानो मन्दिरभित्र दुई प्रतिहारहरूका साथ गणेशमूर्ति उत्कीर्ण गरिएको छ । मूर्तिका चार हातहरूमध्ये दाहिने माथिल्लो हातमा अक्षमाला र तल्लो हातमा मूला समातेको देखाइएको छ । देब्रेपट्टिको माथिल्लो हातमा बञ्चरो र तल्लो हातमा लड्डूसहितको कचौरा देखाइएको छ । गणेशको दायाँ भागमा गजकर्ण-अञ्जलीमुद्रामा रहेका छन्। यस मूर्तिलाई नवौं-दसौं शताब्दीतिरको मानिएको छ ।

३३. **टोखाको गणेशमूर्ति** - प्रभामण्डलरहित गणेशमूर्ति टोखामा रहेको छ । दायाँ-बायाँ वाहनका रूपमा रहेको मूसाको टाउको देखिन्छ । यस शैलीका गणेशका मूर्तिहरू काठमाडौं, ललितपुर र भक्तपुरमा पनि पाइन्छन् । हनुमान्घाट भक्तपुरको पाटी नजिकको ठूलो गणेशमूर्ति, टोखा नारायणमन्दिरको पूर्वपट्टिको पाटीको गणेशमूर्ति, साँगा उकालोको गणेशमूर्ति, वज्रयोगिनी जाने बाटोको गणेशमूर्ति, बनेपा बजारको गणेशमूर्ति, चोखाछैं टोलको गणेशमूर्ति, भक्तपुर तोलाछैंको गणेशमूर्ति, झङ्केश्वरी फर्पिङको गणेशमूर्ति र आर्यघाट जाने बाटोको देब्रेपट्टि रहेको गणेशमूर्तिसँग टोखाको गणेशमूर्तिको आकृति र प्रकृति मिल्दछ ।

३४. **फर्पिङका गोरे गणेश र शेरकालि गणेश** - फर्पिङमा रहेको गोरे गणेशमन्दिर प्रसिद्ध छ । चार हातमा चार प्रकारका आयुधले सम्पन्न यस गणेशमूर्तिको सूँढ शरीर सुहाउँदो छैन । घाँटीमा हार र हात-खुट्टामा

सर्पको गहना उत्कीर्ण गरिएको छ । मूर्तिको वनावट र शैली हेर्दा यो मन्दिर पन्ध्रौं-सोह्रौं शताब्दीको हो भन्न सकिन्छ । भाषावंशावलीमा फर्पिङस्थित शेषनारायणमन्दिरमा अवस्थित शेरकलि गणेशमूर्तिको वर्णन गरिएको छ । प्राचीन समयमा यो स्थान ठूलो गणेशपीठका रूपमा प्रसिद्ध रहेको वर्णन पाइन्छ ।

३५. **धोबीचौरको गणेशमूर्ति** – काठमाडौं धोबीचौरमा भोंडे गणेशको प्राचीन मूर्ति रहेको छ । यो मूर्ति कलात्मकताभन्दा स्वाभाविकतामा आश्रित छ ।

३०. **जोर गणेशमन्दिर** – काठमाडौंमा अवस्थित जोरगणेशको मन्दिर निकै प्रसिद्ध छ । यसलाई काठमाडौं उपत्यकाका प्रसिद्ध गणेशपीठहरूमध्ये एउटा पीठ मानिएको छ ।

३०. **गोमा गणेशमन्दिर** – नक्साल गैह्रीधारानिर गोमा गणेशको भव्य मन्दिर रहेको छ। यस मन्दिरमा श्रीगणेशको धातुमूर्ति स्थापना गरिएको छ ।

३६. **देवपाटनका पाँचु गणेश** – काठमाडौं देवपाटनमा पाँचुगणेशको नामबाट एउटा गणेशमूर्ति रहेको छ ।

३७. **चिकंअट शिवमन्दिरको गणेशमूर्ति** – चिकं अट शिवमन्दिरको दक्षिणपूर्व भागमा प्रस्तरनिर्मित गणेशमूर्ति रहेको छ ।

३८. **चिकंमुगल टोलको गणेशमूर्ति** – चिकंमुगल टोलमा अठारौं शताब्दीताका निर्मित प्रस्तरको चतुर्भुज गणेशमूर्ति रहेको छ ।

३९. **टुकवहालको गणेशमूर्ति** – काठमाडौं टुकबहालमा कलाको दृष्टिबाट निम्नकोटिको चतुर्भुज गणेशमूर्ति रहेको छ ।

४०. **भाटभटेनीको साईगणेशमन्दिर** – काठमाडौं प्रसिद्ध भाटभटेनी मन्दिर नजिकै मीनबहादुर गुरुङद्वारा हालै साईगणेशमन्दिरको स्थापना गरिएको छ ।

४०. **हाँडीगाउँको गणेशमूर्ति** – हाँडीगाउँमा रहेको कार्तिकेयमूर्तिको फलकमा देब्रेपट्टि चतुर्भुज गणेशमूर्ति कुँदिएको छ । यसको आकृति हेर्दा यसलाई लिच्छविकालीन भन्न सकिन्छ ।

४१. **इन्द्रचोक वंशेश्वरमन्दिरको गणेशमूर्ति** – काठमाडौं इन्द्रचोकमा वंशेश्वरमन्दिर छेउ उभिएको दुइहाते गणेशमूर्ति रहेको छ ।

४२. **नयाँ नैकापको आद्यकालिका मन्दिरको गणेशमूर्ति** – काठमाडौं नयाँ नैकापमा रहेको आद्यकालिका मन्दिरमा गणेशको मूर्ति पनि स्थापित छ । उक्त आद्यकालिका मन्दिरको स्थापना एउटा सिद्धबाबाले गरेका थिए । तिनले दक्षिणकालीबाट मूर्ति ल्याएर आद्याभगवतीको प्रतिष्ठा गराएका हुन् ।

४३. **काठमाडौंका अनेक गणेशमन्दिर** – काठमाडौंमा क्षेत्रपाटीको श्वेतगणेशमन्दिर, सतुङ्गलको गणेशमन्दिर, गुर्जुधारा चोकको गणेशमन्दिर, टङ्गालको गणेशमन्दिर, पकनाजोलको गणेशमन्दिर, गैरीधाराको गणेशमन्दिर, हाडिगाउँको गणेशमन्दिर, कुलेश्वरको गणेशमन्दिर, गोंगबुको गणेशमन्दिर, सामाखुसीको गणेशमन्दिर, थानकोटको गणेशमन्दिर, थानकोट चेकपोष्टको गणेशमन्दिर, मातातीर्थको गणेशमन्दिर, टेङ्गलकोगणेशमन्दिर, कुलेश्वरको गणेशमन्दिर आदि टोल–टोलमा, गल्ली–गल्लीमा स्थानगणेशका रूपमा सैकडौं गणेशमन्दिर र मूर्ति रहेका छन्।

## गु ) ललितपुर

१. **कुम्भेश्वर मन्दिरको गणेशमूर्ति** – पाटन मङ्गलबजारबाट शङ्खमूल जाने बाटामा रहेको कुम्भेश्वरमन्दिरको परिसरमा शिलाको विशाल गणेशमूर्ति रहेको छ ।

२. **बगलामुखीमन्दिर-परिसरका गणेशमन्दिर र मूर्तिहरू** – पाटन कुम्भेश्वर परिसरमा दशमहाविद्यामध्ये प्रसिद्ध बगलामुखी भगवतीको मन्दिर रहेको छ । यिनलाई महात्रिपुरसुन्दरी पनि भनिन्छ । बगलामुखी मन्दिरको परिसरमा अरू देवी-देवताका साना-साना मन्दिरका साथै गणेशको मन्दिर पनि रहेको छ । यहाँ नै मनकामना मूर्तिका साथ गणेशमूर्ति पनि रहेको छ ।

३. **पाटन दरबारको सिद्धिविनायक गणेशको मूर्ति – पाटनको** मङ्गलबजारमा रहेको पाटन दरबारमा सिद्धिनरसिंह मल्ल राजाको नामलाई सार्थक बनाउने उद्देश्यले सिद्धिको अर्थमा सिद्धिविनायकको मूर्ति नरसिंह भनेको विष्णुको मूर्ति र मल्ल भनेको हनुमान् भन्ने अर्थ गरी उक्त तीन देवताका मूर्तिहरू राखिएका छन् ।

४. **जगन्नारायणको गणेशमूर्ति – वाग्मतीको** तट शङ्खमूलमा रहेको जगन्नारायणमन्दिरअगाडि प्रस्तरको कलात्मक, भव्य र विशाल गणेशमूर्ति रहेको छ । यस मूर्तिलाई काठमाडौं उपत्यकाको सबभन्दा विशाल मूर्ति मानिएको छ । जङ्गबहादुर राणाका भाइ जगतशमशेरले जगतनारायण मन्दिरअगाडि गणेश र हनुमान्का विशाल मूर्ति बनाई प्रतिष्ठा गरेको तथ्यलाई त्यहाँ रहेको स्तम्भलेखले प्रमाणित गर्दछ ।

५. **महालक्ष्मीस्थानको गणेशमूर्ति – ललितपुर उपमहानगरपालिका**अन्तर्गत वडा नं. ५ थसिखेलमा रहेको महालक्ष्मीस्थानमा पर्खालको आडमा गणेशमूर्ति रहेको छ । ५ नं. वडामा नै दक्षिणकालीमन्दिरको परिसरमा गणेशमन्दिर पनि छ । मन्दिरभित्र रहेको शिलालाई नै गणेश मानी पूजा गरिन्छ । लगनखेल पाटन अस्पतालअगाडि एउटा गणेश मन्दिर छ । यसैगरी त्यहाँ कुमारीपाटी गणेशमन्दिर, तफाले गणेशमन्दिर एवं सिद्धिविनायकका मन्दिर पनि रहेका छन् ।

६. **पञ्चेश्वरमन्दिरको गणेशमूर्ति – ललितपुर उपमहानगरपालिका** वडा नं. १३ कुसुन्तीको पाँचथलीमा पञ्चेश्वर महादेवको मन्दिरका चार सुरमा अरू देवताका साथै गणेशमूर्ति पनि रहेको छ । मन्दिर-परिसरको दायाँ-बायाँ भित्तामा पनि गणेशमूर्ति स्थापित छ ।

७. **नारायणमन्दिरको गणेशमूर्ति** – पाटन भीमसेनस्थानबाट बगलामुखी जाने बाटोमा रहेको स्व:टोलमा नारायणमन्दिर छ । त्यसको नजिकै गणेशमूर्ति प्रतिष्ठापित छ ।

८. **सेंदू गणेशमन्दिर** – पाटनको शिखबहिलटोलमा प्यागोडा शैलीको दुइतले गणेशमन्दिर रहेको छ । यसभित्र गणेशको रूप आउने कालो चिल्लो शिलाको प्रतीकमूर्ति रहेको छ ।

९. **पूर्णचण्डीको गणेशमूर्ति –** पाटनको गा:बहालनजिकै रहेको पूर्णचण्डीनामक स्थानमा पूर्णचण्डी अथवा सिद्धिलक्ष्मीको मन्दिर छ । यस मन्दिरको तोरणमा गणेशमूर्ति कुँदिएको छ । यी पूर्णचण्डीलाई दशमहाविद्यामध्येकी कमलासिद्धलक्ष्मी पनि भनिन्छ । यी सिद्धिलक्ष्मी कुलमार्तण्ड, भैरव, गणेश एवं कुमारीका साथ रहेकी छिन् ।

१०. **कार्यविनायकमन्दिर** – उपत्यकाका चार विनायक र आठ विनायकमध्येका एक विनायक कार्यविनायक हुन् । कार्यविनायकमन्दिर बुँमती गा.वि.स.मा अवस्थित छ । दक्षिणाभिमुख, कलात्मक तोरणले सजाइएको, प्यागोडा शैलीको एकतले कार्यविनायक मन्दिरको अगाडि गणेशको वाहन छुचुन्द्रो रहेको छ । मन्दिरमा चाँदीको विनायकमूर्ति छ ।

११. **पाटन कोटलाक्षीको गणेशमूर्ति** – पाटन कोटलाक्षीमा अर्धपर्यङ्कासनमा रहेको प्राचीन गणेशमूर्ति अवस्थित छ ।

१२. **पाटन मणिछेँ आगमको गणेशमूर्ति** – पाटन मणिछेँ आगममा फूलबुट्टे आसनमाथि प्राचीन गणेशमूर्ति रहेको छ ।

१३. **पाटन इलाननीको गणेशमूर्ति** – पाटन इलाननीमा १८ औं शताब्दीताका निर्मित त्रिभङ्ग अवस्थाको चतुर्भुज गणेशमूर्ति रहेको छ ।

१४. **पाटन पिलाछेंको गणेशमूर्ति** – पाटन पिलाछेंमा नृत्यरत चतुर्भुज गणेशमूर्ति रहेको छ । उक्त मूर्तिमा श्रीगणेशले सूँडद्वारा लड्डू खाइरहेको देखाइएको छ ।

१५. **चुनदेवीको गणेशमूर्ति** – बुँमतीबाट दक्षिणतर्फ चुनिखेलको चुनदेवी भन्ने ठाउँमा चुनदेवीमन्दिर रहेको छ। सिंहवाहिनी भगवती चुनदेवीको मूर्तिको दायाँपट्टि पश्चिममा अन्य देवी–देवताका मूर्तिका साथै गणेशमूर्ति पनि रहेको छ ।

१६. **वज्रवाराहीको गणेशमूर्ति** – उपत्यकाका चार वाराहीहरू (धुंवाराही, नीलवाराही, श्वेतवाराही र वज्रवाराही) प्रसिद्ध छन् । तीमध्ये वज्रवाराहीमन्दिर चापागाउँ र झरुवारासीको सीमामा रहेको छ । यस मन्दिरको भित्तामा गणेशमूर्ति पनि छ ।

१७. **सिद्धेश्वर महादेवमन्दिरको गणेशमूर्ति** – गोदावरी कुण्डको दक्षिण–पश्चिमतर्फको भित्ताको गुफामा सिद्धेश्वरमहादेवको लिङ्ग रहेको छ । त्यस ठाउँमा शिलामय गणेशमूर्ति पनि छ । त्यहाँ भक्तहरूले अनेक देवी–देवताका मूर्तिहरूका साथै गणेशमूर्तिको पनि प्रतिष्ठा गरेका छन् ।

१८. **लुभु महालक्ष्मीस्थानको गणेशमूर्ति** – लुभुको महालक्ष्मीस्थान निकै प्रसिद्ध छ र यहाँको महालक्ष्मी यात्रा पनि उत्तिकै प्रसिद्ध छ । वैशाखशुक्ल तृतीयादेखि दशमीसम्म महालक्ष्मीयात्रा गरिन्छ । त्यसबेला गणेशमूर्ति पनि राखेर यात्रा चलाइन्छ । महालक्ष्मीमन्दिर–परिसरमा सूर्यविनायक गणेश र अन्य गणेशका मूर्तिहरू पनि रहेका छन् ।

१९. **गोभराटेश्वरको गणेशमन्दिर** – लुभु बजारको पूर्वपट्टि गोभराटेश्वर महादेवको प्रसिद्ध मन्दिर रहेको छ । यस मन्दिरको परिसरमा गणेशमन्दिर पनि छ ।

२०. **ललितपुरका अन्य गणेशमन्दिरहरू** – ललितपुर सानेपाको हात्तेपोताको गणेशमन्दिर, सत्सङ्गपरिवारको गणेशमन्दिर, भैंसेपाटीको ध्रुवविनायकमन्दिर, कुमारीपाटीको गणेशमन्दिर, तफालोको गणेशमन्दिर, सिद्धिविनायकमन्दिर आदि टोल–टोलमा, गल्ली–गल्लीमा स्थानगणेशका रूपमा सैकडौं गणेशमन्दिर र मूर्ति रहेका छन् ।

## ग) भक्तपुर

१. **भागुटोल महालक्ष्मीमन्दिरको गणेशमूर्ति** – ठिमी, बोडेको भागुटोल बजारमा रहेको महालक्ष्मीमन्दिरको तोरणमा गणेशमूर्ति कुँदिएको छ ।

२. **कमलविनायकमन्दिर** – भक्तपुर नगरपालिकाको पूर्वीभागको बजारक्षेत्रमा कमलविनायकको मन्दिर रहेको छ । यो मन्दिर ठूलो पोखरीको डिलमा अवस्थित छ । कमलविनायकलाई उपत्यकाका आठ विनायक र चार विनायकमध्येका एक विनायक पनि मानिन्छ ।

३. **सूर्यविनायकमन्दिर** – भक्तपुर बजारबाट करीब १ कि.मि. टाढा कोदारी राजमार्गको दक्षिणतर्फको जङ्गलको

फेदीमा सूर्यविनायक गणेशको मन्दिर रहेको छ । त्यहाँ खुला आकाशको भित्तामा गणेशको आकार देखिने प्राकृतिक शिलामूर्ति पूर्वाभिमुख अवस्थामा रहेको छ । गणेशको अगाडि शिलास्तम्भमा गणेशको वाहन मूसो रहेको छ । यहाँ दर्शनका लागि प्रत्येक मङ्गलवार, माघ महिना, गणेशचतुर्थी र श्रीपञ्चमीमा ठूलो भीड लाग्दछ । यस स्थानबाट केहीमाथि डाँडामा गणेशकी माता पार्वतीको मन्दिर छ । सूर्यविनायकको आराधना गर्नाले आयु र सन्तानको वृद्धि हुने जनविश्वास रहेको छ ।

४. **अनन्तलिङ्गेश्वरको गणेशमूर्ति** – भक्तपुर बजारबाट करीब ६ कि.मि. उत्तर–पूर्व दधिकोट गा.वि.स. वडा नं. ४ मा अनन्तलिङ्गेश्वर महादेवको मन्दिर रहेको छ । भक्तपुरका राजा यक्षमल्लद्वारा निर्मित यस मन्दिरमा अनेक देवी–देवताका मूर्तिहरूका साथै गणेशको मूर्ति पनि प्रतिष्ठापित छ ।

५. **सिद्धिविनायक अथवा सिद्धिगणेशको मन्दिर** – भक्तपुर जिल्लाको मध्यपुर नगरपालिका वडा नं. ४ नकदेशमा सिद्धिविनायकमन्दिर रहेको छ । यो मन्दिर कला र धर्म दुवै दृष्टिकोणबाट महत्त्वपूर्ण मानिन्छ। यस स्थानमा श्रीगणेशको उपासना गरी साधकहरूले सिद्धि प्राप्त गरेका कारण यो मन्दिर सिद्धिविनायकका नामबाट प्रसिद्ध छ ।

५. **तोलाछें टोलको गणेशमूर्ति** – भक्तपुर बजारको पूजारी मठभन्दा पूर्वपट्टि तोलाछें टोलमा भग्न तर मुकुटले युक्त गणेशमूर्ति रहेको छ । यो मूर्ति महाराजलीलासनमा विराजमान छ ।

६. **भद्रकालीमन्दिरको गणेशमूर्ति** – भक्तपुरको भद्रकाली स्थानमा सर्पको यज्ञोपवीत र मुकुट धारण गर्ने श्रीगणेशमूर्ति रहेको छ ।

७. **भक्तपुर हनुमान्घाटका गणेशमूर्तिहरू** – भक्तपुर हनुमान्घाटमा अठारौं शताब्दीताका निर्मित दुई ठूला गणेशमूर्ति रहेका छन् । सम्पूर्ण आयुध, अनेक शिर र अनेक भुजाले समन्वित यी दुवै मूर्तिहरू काठमाडौं रानीपोखरीका,सोह्रहाते गणेशकै आकार–प्रकारका छन् । त्यहाँ रहेको अभिलेखअनुसार यी मूर्तिहरूको स्थापना राजा भूपतीन्द्र मल्लले गरेको तथ्य स्पष्ट हुन्छ ।

८. **भक्तपुर भगवतीमन्दिरको गणेशमूर्ति** – भक्तपुर भगवती मन्दिरमा रहेको उमामहेश्वर फलकमा नृत्यमुद्राको गणेशमूर्ति रहेको छ ।

९. **भक्तपुर गैरीधाराको गणेशमूर्ति** – भक्तपुर गैरीधारामा रहेको उमामहेश्वर फलकमा पनि नृत्यमुद्राको गणेशमूर्ति रहेको छ ।

१०. **पनौतीको गणेशमूर्ति** – पनौती बजारदेखि दक्षिण–पूर्वतर्फ सर्पयज्ञोपवीत धारण गर्ने श्रीगणेशको मूर्ति रहेको छ ।

११. **नीलवाराहीमार्गको गणेशमन्दिर** – बोडेको नीलवाराहीतर्फ जाने बाटोमा सानो गणेशमन्दिर रहेको छ ।

१२. **वाराहीमन्दिरको गणेशमूर्ति** – हनुमन्ते खोलाको पारिपट्टि रहेको वाराहीमन्दिरमा वाराहीमूर्तिको दायाँ भागमा गणेशमूर्ति रहेको छ ।

१३. **भक्तपुरका अष्टगणेश** – भक्तपुरमा अष्टगणेश, अष्टभैरव र अष्टमातृकाको तान्त्रिकविधिअनुसार पूजा गर्ने परम्परा रहिआएको छ । डा. पुरुषोत्तमलोचन श्रेष्ठद्वारा प्रणीत **भक्तपुरको नवदुर्गा गण** शीर्षककान्वित पुस्तकको १५७–१५८ पृष्ठमा वर्णन गरिएअनुसार अष्टगणेशका नेवारी भाषामा आधारित नाम यसप्रकार छन्– १) खाँचो गणेश, २) जेंला गणेश, ३) पं भो गणेश, ४) कवँत्व गणेश, ५) म: चो ग णेश, ६) चोङ्गा

गणेश, ७) लाटा गणेश र ८) क्वाठण्डौ गणेश । ब्रह्मवैवर्तपुराण (३/४४/८५)मा गणेश एकदन्त, हेरम्ब, विघ्ननायक, लम्बोदर, शूर्पकर्ण, गजवक्त्र र गुहाग्रजका नामबाट अष्टगणेशको वर्णन गरिएको छ । यसैगरी अमरकोष प्रथमकाण्डमा विनायक, विघ्नराज, द्वैमातुर, गणाधिप, एकदन्त, हेरम्ब, लम्बोदर, गजाननका रूपमा गणेशका आठ नामहरूको उल्लेख गरिएको छ । भक्तपुरका अष्टगणेश र यी नामहरूको एकरूपता छ वा छैन भन्ने विषय अनुसन्धेय छ । भक्तपुरमा माथि बताइएका अष्टगणेशसँग मल्दाजुल्दा नाम भएका निम्नानुसारका अष्टगणेश पनि रहेका छन् - १. जेंला गन्द्यः - जैलाटोलको मन्दिरसामु, २. पातिङ्गन्द्यः - इनाचोटोल माहेश्वरी पीठसामु, ३. तमाहीगन्द्यः - टौमढीटोल, पाँचतले मन्दिरको नैऋत्यकोणमा, ४. पातालगन्द्यः - गहिटीटोलमा, ५. मूलाखुगन्द्यः - तेखाचोटोलमा, ६. खौपागन्द्यः - खौपाटोलमा, ७. लाटागन्द्यः - महाकालीपीठमा, ८. थालाछें गन्द्यः - थालाछें टोलमा ।

१४. **त्रिकुण्डगणेश** - भक्तपुरमा १) याछें गणेश, २) चोछें गणेश, ३) अतिबुक्छे गणेश गरी यी तीन गणेशलाई त्रिकुण्डगणेश भनिन्छ । उक्त गणेशहरूलाई नवदुर्गा गणले आरति प्रदान गर्ने विधान रहेको छ ।

१५. **गणेशको मुकुण्डो लगाई नृत्य गर्ने परम्परा** - उपत्यकाका चार वाराहीमध्ये एक नीलवाराही हुन् । यिनको मन्दिर बोडे गाउँको जङ्गलमा रहेको छ । नीलवाराही नाचमा १९ जनाले गणेशको मुकुण्डो लगाई नृत्य गर्ने परम्परा रहिआएको छ ।

१६. **भक्तपुरका अन्य गणेशमन्दिर र मूर्तिहरू** - भक्तपुर जिल्लामा हनुमान्घाट ओह्रालोको पम्भो गणेशमन्दिर, बसिकचाको सिद्धिविनायकमन्दिर, गहिटीको तीन तले गणेशमन्दिर, चोर्चाभाको गणेशमन्दिर, गकागचाको गणेशमन्दिर, बालकुमारीको गणेशमूर्ति, चपाचोको गणेशमन्दिर, बालकोटको गणेशमन्दिर आदि टोल-टोलमा, गल्ली-गल्लीमा स्थानगणेशका रूपमा सैकडौं गणेशमन्दिर र मूर्ति रहेका छन् ।

## गे) मकवानपुर

१. **टिष्टुङ्को गणेशमन्दिर** - टिष्टुङ्को वडा नं. ५ को कुन्छाल भन्ने ठाउँमा प्यागोडा शैलीको मन्दिरभित्र प्राकृत शिलाको गणेशको प्रतीक मूर्ति छ । यहाँ शनिबार र मङ्गलवार दर्शनार्थीहरूको ठूलो भीड लाग्दछ ।

२. **शङ्खमूलको गणेशमूर्ति** - पालुङ बजारको नजिकै सोटु, हात्तिपाइला र महादेव यी तीन खोलाको सङ्गमलाई शङ्खमूल भन्दछन् । त्यहाँको चौरमा जनैपूर्णिमाको दिन हिलेजात्रा मनाइन्छ । त्यहाँ इन्द्रायणी, भैरव र गणेश आदिको खटजात्रा पनि गरिन्छ । यस ठाउँमा अन्य धेरै देवताका मूर्तिहरूका साथै श्रीगणेशमूर्ति पनि रहेको छ ।

३. **इन्द्रायणी माईस्थानको गणेशमूर्ति** - इन्द्रायणी माईको स्थान पालुङ गा.वि.स. वडा नं. ३ पालुङनदीको किनार नजिकै नेपाली गाउँमा पर्दछ । यस मन्दिरमा शिलाको देवीको मूर्ति रहेको छ । त्यसको दायाँ-बायाँ वाराही भगवती, भैरव, नारायण र भैरवीका स-साना शिलाका मूर्तिहरूका साथै गणेशमूर्ति पनि रहेको छ।

४. **पाल्चोक र खोन नदी दोभानको गणेशमन्दिर** - यो गणेशमन्दिर टिष्टुङ गा.वि.स. वडा नं. १ को पाल्चोक र खोन नदीको दोभानमा पर्दछ । यो प्यागोडा शैलीको एकतले मन्दिरभित्र गणेशको प्रतीक प्राकृतिक शिलाको मूर्ति छ ।

५. **पाण्डुकेश्वर महादेवस्थानको गणेशमूर्ति** - यो महादेवको मन्दिर पालुङ गा.वि.स. वडा नं. ४ को

अङ्गारे भन्ने ठाउँमा सरस्वती नदीको किनारमा पर्दछ । प्यागोडा शैलीको तीनतले यस मन्दिरभित्र प्राकृतिक शिलाको शिवलिङ्ग रहेको छ । यस मन्दिरभित्र चार कुनामा नारायण, गणेश आदि देवताहरूका मूर्ति छन्।

### गै) रौतहट

रौतहट जिल्लाको राजदेवीमा प्यागोडा शैलीको मन्दिरमा खुँडाको आकारको एक शिला छ । त्यसैलाई राजदेवी भनेर दैनिक पूजा गरिन्छ । राजदेवी मन्दिरको दायाँपट्टि सानो गणेशमन्दिर पनि रहेको छ। यस जिल्लाका अन्य मन्दिरहरूमा गणेशका मूर्तिहरू स्थापित गरिएका छन् ।

### गो) बारा

कलैया नगरपालिका वडा नं. ४ मा राजदेवीको मन्दिर रहेको छ । यस मन्दिरको अगाडि भित्तामा सरस्वती आदि देवी-देवताहरूका मूर्तिहरूका साथै श्रीगणेशमूर्ति पनि रहेको छ । यस जिल्लाका अन्य मन्दिरहरूमा पनि गणेशका मूर्ति पाइन्छन् ।

### गौ) पर्सा

पर्सा जिल्लामा स्वतन्त्र रूपमा गणेशमन्दिर रहेको विवरण प्राप्त छैन । विभिन्न देवीदेवताका मन्दिरहरूमा अङ्गमूर्तिका रूपमा श्रीगणेशका मूर्तिहरू पाइन्छन् ।

### गं) चितवन

१. **भरतपुर बजारको गणेशमन्दिर** – भरतपुर बजारमा नवनिर्मित गणेशमन्दिर रहेको छ ।

२. **नारायणघाटको गणेशमन्दिर** – नारायणघाट बजारमा गणेशभक्तहरूको आस्थाकेन्द्र गणेशमन्दिर रहेको छ । यसरी नै विभिन्न देवीदेवताका मन्दिरहरूमा अङ्गमूर्तिका रूपमा श्रीगणेशका मूर्तिहरू पाइन्छन्।

३. **गण्डकीनगरको श्रीगणेशमन्दिर** – चितवन जिल्लाको रामनगरदेखि दक्षिणतर्फ जाँदा भरतपुर र नारायणगढ जाने चोकमा पुगिन्छ । त्यहाँबाट भरतपुर जाने बाटोमा लागेपछि बीचमा अत्यन्त प्राचीन गण्डकीनगरको गणेशमन्दिर देख्न सकिन्छ । यो मन्दिर गणेशपुराणको क्रीडाखण्डमा वर्णन गरिएको गण्डकीनगरमा स्थापित गणेशमूर्ति हो भन्ने जनविश्वास रहेको छ ।

### गः) गोरखा

१. **मनकामना मन्दिरको गणेशमूर्ति** – गोरखा जिल्लामा रहेको मनकामनामन्दिर निकै प्रसिद्ध छ । यस मन्दिरभित्र अनेक देवीदेवताका प्रतिमा र शिलामय प्रतीक मूर्तिहरूमध्ये गणेश र भैरवका मूर्तिहरू पनि छन्।

२. **सत्यरूपेश्वर सिद्धिविनायकमन्दिर** – सिद्धिविनायक गणेशको मन्दिर गोरखा दरबारको नजिकै रहेको छ। यस मन्दिरको निर्माण वि.सं. १९७९ मा उद्योत शाहले गरेका हुन् ।

३. **गोरखनाथमन्दिर समीपको गणेशमन्दिर** – गोर्खा जिल्लाको सदरमुकाम गोरखा बजारमा गुरु गोरखनाथ मन्दिरको नजिकै गणेशको प्रसिद्ध मन्दिर रहेको छ ।

**घ) मनाङ**

मनाङ जिल्लामा स्वतन्त्र रूपमा गणेशको मन्दिर रहेको विवरण प्राप्त भएको छैन । विभिन्न देवीदेवताका मन्दिरहरूमा अङ्गमूर्तिका रूपमा श्रीगणेशका मूर्तिहरू पाइन्छन् ।

**घा) लमजुङ**

**कालिकामन्दिरमा रहेको गणेशमूर्ति** - सदरमुकाम बेँसीसहरबाट पश्चिम-दक्षिणतर्फ गाउँसहर भन्ने ठाउँमा कालिकामन्दिर रहेको छ । कालिकामन्दिरको नजिकमा हनुमान् र गणेशका मूर्तिहरू रहेका छन् । यसैगरी विभिन्न देवीदेवताका मन्दिरहरूमा अङ्गरूपमा गणेशका स-साना मूर्तिहरू भेटिन्छन् ।

**घि) तनहुँ**

१. **देवघाटको सिद्धिगणेशमूर्ति** - तनहुँको देवघाट आदिप्रयागका रूपमा प्रसिद्ध छ । यहाँ विभिन्न मठ र मन्दिरहरू रहेका छन् । यहाँ गौरीगणेशमन्दिर रहेको छ ।

२. **हरिहरमन्दिरको गणेशमूर्ति** - देवघाटको पारिपट्टि हरिहरमन्दिर रहेको छ । हरिहरमन्दिरको शिवलिङ्गदेखि बायाँतर्फको अर्को कोठामा गणेश र हनुमान्का मूर्तिहरू रहेका छन् ।

३. **केदारनाथमन्दिरको गणेशमूर्ति** - **देवघाट**मा रहेको केदारनाथमन्दिरमा मूल मूर्तिका सामु गणेशमूर्ति पनि रहेको छ ।

४. **बद्रीनारायणमन्दिरको गणेशमूर्ति** - देवघाटक्षेत्रमा रहेको बद्रीनारायणमन्दिर प्रसिद्ध छ । यस मन्दिरको मूलद्वारको दायाँ-बायाँ भागमा जय-विजयका मूर्ति रहेका छन् भने मन्दिरभित्र आग्नेयकोणमा ब्रह्मा र नैर्ऋत्यकोणमा गणेशमूर्ति रहेको छ ।

५. **पाञ्चायनमन्दिरअन्तर्गत गणेशमन्दिर** - दमौली नगरपालिका क्षेत्रमा पाञ्चायन देवताका पाँच मन्दिर रहेका छन् । तीमध्ये गणेशमन्दिर पनि एक हो । यस मन्दिरमा गणेशको शिलामूर्ति रहेको छ ।

**घी) कास्की**

१. **विन्ध्यवासिनीमन्दिर-परिसरको गणेशमन्दिर** - पोखरा उपमहानगरपालिका वडा नं. २ मा महेन्द्रपुलदेखि उत्तरतर्फ मोहरिया टोलमा विन्ध्यवासिनी भगवतीको मन्दिर रहेको छ । यस मन्दिरअन्तर्गत सानो गणेशमन्दिर पनि रहेको छ ।

२. **गणेशटोलको गणेशमन्दिर** - पोखरा उपमहानगरपालिकाअन्तर्गत गणेशटोलमा गणेशमन्दिर रहेको छ । धातुको छानामा सुवर्णको गजुर राखिएको एकतले यस मन्दिरमा गणेशको प्रतीकात्मक एउटा कालो शिलामा पूजा गरिन्छ । त्यहाँ एउटा शिलामय गणेशमूर्ति र अर्को धातुमय चतुर्बाहु गणेशमूर्ति पनि स्थापना गरिएका छन्। यस मन्दिरमा प्रत्येक मङ्गलवार र गणेशचौथीका दिन दर्शनार्थी भक्तजनहरूको भीड लाग्दछ।

३. **हरिहरआश्रमको गणेशमूर्ति** - कास्की जिल्लाको भलाम गा.वि.स.अन्तर्गत बाबाजीवन भन्ने ठाउँमा पहाडको टुप्पोमा हरिहर आश्रम रहेको छ । यहाँ शिव, गणेश र हनुमान्का मूर्ति छन् ।

**घु) स्याङ्जा**

१. **गणेशपुरको गणेशमन्दिर** - स्याङ्जा जिल्लाको गणेशपुर गाउँमा गणेशमन्दिर रहेको छ । यसै मन्दिरको

नामबाट त्यस गाउँको र गा.वि.स.समेतको नामकरण भएको छ ।

२. **भृगुतुङ्गेश्वरको गणेशशिला** - स्याङ्जा जिल्लामा पर्ने तर पाल्पा र गुल्मी ज्यादै निकट रुरुक्षेत्र पारिपट्टि कालिपारमा रहेको भृगुतुङ्गेश्वर मन्दिर सिद्धक्षेत्रका रूपमा प्रख्यात छ । त्यस प्राकृतिक मन्दिरमा श्रीगणेशको प्राकृतिक भव्य शिलामय मूर्ति रहेको छ ।

३. **मालुङ्गाको गणेशमन्दिर** - राम्दी नजिकै रहेको मालुङ्गा गाउँमा भक्तहरूद्वारा केही वर्षअघि स्थापना गरिएको सुन्दर गणेशमन्दिर रहेको छ ।

यसै गरी स्याङ्जा जिल्लाका विभिन्न देवीदेवताका मन्दिरहरूमा अङ्गमूर्तिका रूपमा श्रीगणेशका मूर्तिहरू पाइन्छन् । यहाँको एउटा गाउँको नाउँ गणेशपुर र त्यसै नामको आधारमा गा.वि.स.को नाम गणेशपुर रहनुले पनि यहाँका नरनारीहरूमा गणेशप्रति अत्यधिक भक्तिभाव रहेको प्रमाणित हुन्छ।

### घू) पर्वत

**धनेश्वर शिवालयमन्दिरको गणेशमूर्ति** - शिवालय गा.वि.स. वडा नं. ४ को माझ गाउँमा धनेश्वर महादेवमन्दिर रहेको छ । यस मन्दिरका चार सुरमा क्रमश: गणेश, भैरव, भगवती र विष्णुका मूर्तिहरू रहेका छन्। यस जिल्लाका अन्य देवीदेवताका मन्दिरहरूमा अङ्गमूर्तिका रूपमा श्रीगणेशका मूर्तिहरू पाइन्छन् ।

### घे) मुस्ताङ

मुस्ताङ जिल्लामा स्वतन्त्र रूपमा गणेशमन्दिर रहेको विवरण प्राप्त छैन । विभिन्न देवीदेवताका मन्दिरहरूमा अङ्गमूर्तिका रूपमा श्रीगणेशका मूर्तिहरू पाइन्छन् ।

### घै) म्याग्दी

**बालमुक्तेश्वर'मन्दिरको गणेशमूर्ति** - म्याग्दी जिल्लाको सदरमुकाम बेनीमा बालमुक्तेश्वरमन्दिर रहेको छ। यस मन्दिरका चार सुरमा गणेश, भगवती, नारायण र सूर्यका मूर्तिहरू रहेका छन् । यसैगरी यस जिल्लाका अनेक देवीदेवताका मन्दिरहरूमा पनि अङ्गदेवताका रूपमा गणेशका मूर्तिहरू पाइन्छन् ।

### घो) बाग्लुङ

**कालिकादेवीस्थानको गणेशमूर्ति** - कालिका भगवतीको मन्दिर बाग्लुङ बजारको नजिकै काली गण्डकी र काठेखोलाको दोभानमा पर्दछ । यस मन्दिरमा गणेशमूर्ति पनि रहेको छ । साथै यस मन्दिर-परिसरमा सानो गणेशमन्दिर पनि रहेको छ । बाग्लुङ नगरपालिकाभित्र बजारमा भीरगणेश र ढुण्ढिगणेशका मूर्तिहरू रहेका छन्।

### घौ) पाल्पा

१. **श्रीनगरको गणेशमन्दिर** - तानसेनको शिरमा रहेको श्रीनगर डाँडामा श्रीनगर-गणेशमन्दिर रहेको छ ।

२. **तानसेन बजारको गणेशमन्दिर** - तानसेन बजारमा स्थानीय श्रद्धालुहरूद्वारा निर्मित गणेशस्थान रहेको छ। यहाँ प्रत्येक मङ्गलबार दर्शनार्थीहरूको भीड लाग्दछ ।

३. **अमरगणेशको मन्दिर** - तानसेनको भगवतीमन्दिरको परिसरमा वीर अमरसिंह थापाद्वारा निर्मित अमरगणेशमन्दिर रहेको छ ।

४. **रण-उजिरेश्वरी भगवतीमन्दिरको गणेशमूर्ति** - पाल्पा जिल्लाको तानसेन नगरपालिका वडा नं. ८ को

भगवती टोलको दरबार-परिसरमा रण-उजेश्वरी भगवतीमन्दिर रहेको छ । अठार हात भएकी भगवतीलाई महिषासुरमर्दिनी भगवतीका रूपमा मानिन्छ । कुशल योद्धा कर्णेल उजीरसिंह थापाले गोरखपुरको बाटो हुँदै युद्ध गर्न आउने अंग्रेजको फौजलाई बुटवल नजिकको जितगढीमा हराएकोले सोही खुसियालीको अवसरमा आफ्नो विजयको प्रतीकका रूपमा सन् १८७२ मा यस मन्दिरको निर्माण गरेका हुन् । यहाँ श्रीगणेशमूर्ति पनि रहेको छ।

५. **अमरनारायणमन्दिरको गणेशमूर्ति-** तानसेन नगरपालिका वडा नं. २ अमरगञ्जमा रहेको अमरनारायणमन्दिरमा नारायणको भव्य प्रतिमा रहेको छ । उक्त प्रतिमाको दायाँ भागमा गणेशमूर्ति रहेको छ।

६. **रिडी ऋषिकेशवमन्दिर, रिडीको गणेशमूर्ति -** रिडीको ऋषिकेशवमन्दिर ज्यादै प्रसिद्ध छ । यसको निर्माण पाल्पाली राजा मुकुन्द सेनले गरेका हुन् । यहाँ भगवान् नारायणको प्रतिमाका सामु अन्य देवीदेवताका मूर्तिहरूका साथै श्रीगणेशमूर्ति पनि रहेको छ ।

७. **राम्दी सिद्धगुफाको गणेशमूर्ति -** काली गण्डकीको तट राम्दीघाट नजिकै पहराको बीचमा सिद्धगुफा रहेको छ । यहाँ पौराणिक कालमा कपिलमुनिले तपस्या गरेका थिए । यस गुफामा सिद्ध, गणेश र सरस्वतीका स्वयम्भू प्रतिमाहरू छन् ।

९. **अर्गलीको गणेशमूर्ति -** पाल्पा जिल्लाको अर्घलीनामक स्थानमा कालीगण्डकीको तीरमा सत्येश्वर महादेवको मन्दिरभित्र श्रीगणेशको मूर्ति पनि रहेको छ ।

१०. **रिब्दीकोट जलेश्वरमन्दिरको गणेशमूर्ति -** पाल्पाको ऐतिहासिक राजधानी रिब्दीकोटमा जलेश्वर महादेवको मन्दिरको गर्भगृह एवं परिसरमा गणेशका मूर्ति रहेका छन् ।

११. **सिद्धबाबा मन्दिरको गणेशमूर्ति -** पाल्पा र रूपन्देहीको सीमामा पर्ने दोभान क्षेत्रमा सिद्धबाबा मन्दिर रहेको छ । त्यसमा अनेक देवी-देवताका मूर्तिहरूका साथै श्रीगणेशको मूर्ति पनि रहेको छ ।

१२. **रानीघाटको गणेशमूर्ति -** पाल्पा र स्याङ्जाको मध्यवर्ती कालीगण्डकीको तीरमा पाल्पातर्फ रहेको रानीघाट मन्दिरमा श्रीगणेशको मूर्ति रहेको छ ।

## घं) गुल्मी

१. **रुरुक्षेत्रको गणेशमन्दिर -** यो गणेशको मन्दिर रुरु गा.वि.स. वडा नं. ५ मा पर्दछ । त्यहाँ गुम्बज शैलीका दुई मन्दिर छन् । तीमध्ये पश्चिमपट्टिको मन्दिरभित्र रिडीखोलाको पुरानो मन्दिर बगाएपछि त्यहाँकै पुरानो मूर्ति ल्याई गणेशको स्थापना गरिएको हो । पूर्वपट्टिको मन्दिरमा भैरवमूर्ति रहेको छ ।

२. **मानकोटको आत्मविनायक मन्दिर -** मानकोटक्षेत्रमा आत्मविनायक नामक गणेशमन्दिर रहेको छ । यस मन्दिरमा बिहान-बेलुकी पञ्चैबाजासहित पूजाअर्चना र आरती हुन्छ ।

३. **रुरुक्षेत्रका गणेशमूर्ति -** रुरुक्षेत्रका अनेक मन्दिरहरूमा गणेशका मूर्तिहरू पाइन्छन् ।

४. गुल्मी हुँगानामक स्थानमा अवस्थित श्रीशक्तिधाममा श्रीलोकेश्वर महादेव मन्दिरको गर्भगृहमा श्रीगणेशको मूर्ति पनि रहेको छ ।

४. **त्रिपुरासुन्दरी माईस्थानको गणेशमूर्ति -** वामीटक्सार गा.वि.स. वडा नं. २ मा रहेको त्रिपुरासुन्दरी माईको स्थानमा मूर्तिको दायाँ भागमा गणेशमूर्ति पनि रहेको छ ।

## घ: ) अर्घाखाँची

मथुरावेंसी तीर्थको गणेशमन्दिर - रिडी बजारबाट करीब १० कि.मि. पश्चिममा मथुरावेंसी तीर्थ रहेको छ । यहाँ अनेक देवीदेवताका मन्दिरहरूका साथै गणेशमन्दिर पनि रहेको छ।

२. **सुपादेउरालीको गणेशमूर्ति** - अर्घाखाँचीको खाँचीकोट गा.वि.स.अन्तर्गत सुपाखोलामा सुपादेउरालीमन्दिर रहेको छ । त्यहाँको एक शिलालाई देवीको रूपमा पूजिन्छ । प्यागोडा शैलीको यस मन्दिरभित्र देउरालीको शिला, गणेश र नवदुर्गाका प्रतिमाहरू रहेका छन् ।

## ङ ) नवलपरासी

१. **गैंडाकोटको गणेशमन्दिर** - नवलपरासी जिल्लाको गैंडाकोटमा विभिन्न देवी-देवताहरूका मन्दिरका साथै श्रीगणेशमन्दिर पनि रहेको छ । यस जिल्लाका विभिन्न देवीदेवताका मन्दिरहरूमा अङ्गमूर्तिका रूपमा श्रीगणेशका मूर्तिहरू पाइन्छन् ।

## ङा ) रूपन्देही

१. **तिनाउपारिको जलविनायक मन्दिर** - बुटवल नगरपालिका तिनाउपारि गणेशटोलमा प्राचीन गणेशमन्दिर रहेको छ ।

२. **विर्नीको गणेशमन्दिर** - छिपागड गा.वि.स. वडा नं. ९ विर्नी भन्ने ठाउँमा गणेशमन्दिर रहेको छ । पश्चिमाभिमुख यस मन्दिरमा सिंहमर्मरको आसनमा भव्य गणेशमूर्ति छ ।

३. **गोनहा गा.वि.स.को गणेशमन्दिर** - रूपन्देही जिल्लाको गोनहा गा.वि.स.मा प्राचीन गणेशमन्दिर रहेको छ ।

४. **सिद्धबाबा मन्दिरको गणेशमूर्ति** - बुटवल नगरपालिकादेखि उत्तरतर्फ चिडियाखोलाको तीरमा सिद्धबाबामन्दिर रहेको छ । यस मन्दिरलाई यस क्षेत्रको पवित्र धामका रूपमा लिइन्छ । यस मन्दिरभित्र श्रीगणेशमूर्ति पनि रहेको छ ।

५. **नारायणमन्दिरको गणेशमूर्ति** - नारायणमन्दिर बुटवलको पुरानो बजारमा रहेको छ । यस मन्दिरमा नारायणमूर्तिका साथै शिलामय गणेशमूर्ति पनि रहेको छ ।

६. **कृष्णेश्वर महादेवमन्दिरको गणेशमूर्ति** - तिनाउपारि गणेशटोलमा रहेको कृष्णेश्वर महादेवमन्दिरमा श्रीगणेशमूर्ति पनि रहेको छ ।

७. **पर्रोहापरमेश्वर मन्दिरको गणेशमूर्ति** - पर्रोहा गा.वि.स.अन्तर्गत रानीवगियाबाट २ कि.मि. दक्षिणमा पर्रोहापरमेश्वरको नामबाट प्रसिद्ध शिवलिङ्ग रहेको छ । यहाँ पार्वतीको मूर्ति एवं शिवलिङ्गका साथै प्राचीन गणेशमूर्ति पनि रहेको छ ।

८. **वसडिलवा शिवमन्दिरको गणेशमूर्ति** - सिद्धार्थ नगरपालिका वडा नं. ८ को वर्मेली टोलमा शिवमन्दिर रहेको छ । यस मन्दिरमा गणेशमूर्ति पनि छ ।

९. **भैरहवा नारायणमन्दिरको गणेशमूर्ति** - सिद्धार्थ नगरपालिका वडा नं. ८ मा रहेको नारायणमन्दिरमा नारायणमूर्तिका साथै गणेशमूर्ति पनि रहेको छ ।

( ङि ) कपिलवस्तु

**तौलिहवाको कालीमाईमन्दिरको गणेशमूर्ति -** कपिलवस्तु जिल्लाको तौलिहवा नगरअन्तर्गत रहेको कालीमाईमन्दिरमा मूल कालीमूर्तिको पूर्वतर्फ गणेशमूर्ति रहेको छ । भक्तहरूले श्रीगणेशको पूजा-अर्चना गरेपछि मात्र कालीमाईको पूजा गर्दछन् । बडादशैंमा हुने कालीको रथयात्रामा गणेशको विशेष पूजनपछि मात्र रथयात्रा आरम्भ गरिन्छ । यस जिल्लामा विभिन्न देवीदेवताका मन्दिरहरूमा अङ्गमूर्तिका रूपमा श्रीगणेशका मूर्तिहरू पाइन्छन् ।

ङी ) रुकुम

१. **मुरूको गणेशमन्दिर -** रुकुम जिल्लाको मुरूनामक स्थानमा प्राचीन गणेशमन्दिर रहेको छ । अरू देवताका मन्दिरहरूमा अङ्गदेवताका रूपमा गणेशका मूर्ति रहेका छन् ।

२. **पाञ्चायन देवतामन्दिरको गणेशमूर्ति -** खलङ्गा गा.वि.स. वडा नं. १ मा पाञ्चायन देवतामन्दिर रहेको छ। गणेश पनि पाञ्चायन देवतामध्ये एक देवता भएकाले उहाँको पनि मूर्ति रहेको छ ।

ङु ) रोल्पा

**कालिकामन्दिरको गणेशमूर्ति -** रोल्पा जिल्लाको सदरमुकाम लिवाङ् गा.वि.स. वडा नं. ६ मा कालिकामन्दिर रहेको छ । कालिकामूर्तिको बायाँतर्फ धातुको गणेशमूर्ति रहेको छ । यसैगरी रोल्पामा रहेका अन्य देवीदेवताका मन्दिरहरूमा अङ्गमूर्तिका रूपमा गणेशका मूर्ति पनि रहेका छन् ।

ङू ) प्यूठान

१. **खलङ्गाको गणेशमन्दिर -** यो मन्दिर जिल्ला सदरमुकाम खलङ्गा वडा नं. ४ को गणेशटोलमा पर्दछ । यस मन्दिरको निर्माण वि.सं. १९४४ भाद्र महिनामा भएको हो । पित्तलको गजुर भएको ५ तले प्यागोडा शैलीको यस मन्दिरमा गणेशको मुख्य मूर्तिका साथै भैरवका मूर्तिहरू पनि छन् । यस मन्दिरमा शनिवार, मङ्गलवार, बडादसैं, चैतेदसैंमा विशेष पूजाआजा हुन्छ भने ऋषितर्पणी पछिको पञ्चमीका दिन भने जात्रा पनि लाग्दछ ।

२. **स्वर्गद्वारीको गणेशपाञ्चायनमन्दिर -** प्यूठान जिल्लाको स्वर्गद्वारी आश्रममा शिवपाञ्चायन, देवीपाञ्चायन, विष्णुपाञ्चायन, सूर्यपाञ्चायन र गणेशपाञ्चायनका मन्दिर रहेका छन् ।

३. **स्वर्गद्वारी आश्रमको गणेशमूर्ति -** प्यूठानको सदरमुकाम खलङ्गाबाट २६ कि.मि. पश्चिम **स्वर्गद्वारी गा.वि.स.** वडा नं. १ मा स्वर्गद्वारी आश्रम रहेको छ । स्वर्गद्वारी आश्रम महाप्रभु **हंसानन्द सरस्वतीद्वारा** वि.सं. १९५२ मा स्थापित भएको हो । यहाँ दैनिक हवन गर्ने कुण्ड छ । यसै कुण्डलाई अखण्डधुनि मानिएको छ । नवग्रहको हवनकुण्डका चार सुरमा भगवती, शिव र शालिग्रामका मूर्तिहरूका साथै गणेशमूर्ति पनि रहेको छ ।

४. **कालिकादेवीस्थानको गणेशमूर्ति -** विजयवार गा.वि.स. वडा नं. ३ को माथिल्लो बजारमा रहेको कालिकादेवी मन्दिरमा अन्य देवीदेवताका मूर्तिहरूका साथै गणेशमूर्ति पनि रहेको छ ।

५. **सिद्धफलारी देवतास्थानको गणेशमूर्ति** – दाखाकाडी गा.वि.स. वडा नं. ६ मा रहेको श्रीसिद्धफलारी देवतास्थानमा गणेशमूर्ति पनि रहेको छ ।

६. **भगवतीमन्दिरको गणेशमूर्ति** – मिग्री गा.वि.स. वडा नं. १ मा रहेको भगवतीमन्दिरमा गणेशमूर्ति पनि रहेको छ ।

७. **जाल्पादेवीमन्दिरको गणेशमूर्ति** – विजयवार गा.वि.स. टाहारीमा रहेको जाल्पादेवीमन्दिरमा गणेशमूर्ति रहेको छ ।

**ङे) सल्यान**

**सल्यानको गणेशस्थान** – यो गणेशस्थान सदरमुकाम खलङ्गा बजारको बीच भागमा पर्दछ । यहाँ दैनिक पूजाका साथै मङ्गलवारका दिन भक्तजनहरूको विशेष भीड लागेको हुन्छ । यो मन्दिर निकै पुरानो मानिएको छ । सल्यान जिल्लामा रहेका विभिन्न देवीदेवताका मन्दिरहरूमा अङ्गमूर्तिका रूपमा गणेशका मूर्तिहरू पनि पाइन्छन् ।

**ङै) दाङ**

१. **दाङ बेलभुण्डीको गणेशमन्दिर** – दाङ जिल्लाको बेलभुण्डीमा त्रिलोकेश्वर–महादेवमन्दिर रहेको छ। त्यसैको बगलमा शिलामय मूर्तिसहितको सानो गणेशमन्दिर रहेको छ ।

२. **छिल्लीकोटको गणेशमन्दिर** – दाङ जिल्लाको उत्तरी भेगमा रहेको पर्वतशिखरमा कालिकामन्दिर र मालिकामन्दिरको मध्यभागमा विशाल प्राकृतिक शिलामूर्तिसहितको गणेशमन्दिर रहेको छ ।

३. **बिजौरी गणेशमन्दिर** – दाङ जिल्लाको बिजौरीनामक स्थानमा सूदयरामेश्वर मन्दिरको छेउमा सानो तर सुन्दर गणेशमन्दिर रहेको छ ।

४. **सिरडी साईमन्दिर परिसरको गणेशमन्दिर** – दाङ घोराहीमा सिरडी साईमन्दिर परिसरमा रहेको गणेशमन्दिरमा कालो पत्थरसहितको विशाल गणेशमूर्तिको स्थापना गरिएको छ ।

५. **घोराही क्याम्पस नजिकको गणेशमन्दिर** – दाङ घोराही क्याम्पस नजिकै सार्वजनिक गणेशमन्दिर रहेको छ । यहाँ मङ्गलवार एवं शनिवार दर्शनार्थीहरूको घुइँचो लाग्दछ भने साप्ताहिकरूपमा भजन–कीर्तन गर्ने परम्परा पनि रहिआएको छ ।

६. **अम्बिकेश्वरीमन्दिर परिसरको गणेशमन्दिर** – दाङको सदरमुकाम घोराहीमा रहेको अम्बिकेश्वरीमन्दिरको समीपमा गणेशमन्दिर पनि रहेको छ ।

७. **त्रिसिद्धेश्वरीमन्दिर तुलसीपुरको गणेशमूर्ति** – दाङको तुलसीपुरमा रहेको त्रिसिद्धेश्वरीमन्दिरको गर्भगृहमा श्रीगणेशको मूर्ति पनि रहेको छ ।

८. **पाण्डवेश्वर महादेवमन्दिरको गणेशमूर्ति** – दाङको डुरुवा पहाडको काखमा बबै (सरयू) नदीको तीरमा पाण्डवेश्वरमन्दिरभित्र स्वयम्भूलिङ्गसमीपमा गणेशको मूर्ति पनि रहेको छ ।

**ङो) हुम्ला**

हुम्ला जिल्लाका विभिन्न देवीदेवताका मन्दिरहरूमा अङ्गमूर्तिका रूपमा श्रीगणेशका मूर्तिहरू पाइन्छन् ।

**डौ ) मुगु**

मुगु जिल्लाका विभिन्न देवीदेवताका मन्दिरहरूमा अङ्गमूर्तिका रूपमा श्रीगणेशका मूर्तिहरू पाइन्छन् ।

**डं ) जुम्ला**

**जुम्लाको गणेशगुफा –** यो गुफा जुम्लाबाट ५ कि.मि. दक्षिण ठाकुरनाथ जाने बाटोमा बोहरा गाउँको डाँडामाथि पर्दछ । यस गुफाभित्र चुनढुङ्गा जस्तै सेतो गणेशमूर्ति रहेकाले यस गुफालाई गणेशगुफा भनिएको हुनुपर्दछ ।

**ङः ) डोल्पा**

डोल्पा जिल्लाका विभिन्न देवीदेवताका मन्दिरहरूमा अङ्गमूर्तिका रूपमा श्रीगणेशका मूर्तिहरू पाइन्छन् ।

**च ) कालिकोट**

**पञ्चदेवलको गणेशमन्दिर –** कालिकोटको पञ्चदेवल भन्ने ठाउँलाई पाँचवटा मन्दिर भएका कारण पञ्चदेवल भनिन्छ । यहाँका पञ्चदेवलमध्ये एउटा गणेशदेवल पनि हो । यस जिल्लाका अन्य देवीदेवताका मन्दिरहरूमा अङ्गमूर्तिका रूपमा गणेशका प्रतिमा रहेका छन् ।

**चा ) जाजरकोट**

**खलङ्गाको गणेशमन्दिर –** जाजरकोट जिल्लाको सदरमुकाम खलङ्गामा गणेशमन्दिर रहेको छ । यसैगरी खलङ्गा गा.वि.स.कै शिवालय भन्ने ठाउँमा शिवलिङ्गका सामु गणेशमूर्ति रहेको छ । यस जिल्लाका अनेक देवीदेवताका मन्दिरहरूमा अङ्गमूर्तिका रूपमा गणेशका मूर्ति रहेका छन् ।

**चि ) दैलेख**

१. **दैलेखनगरको गणेशमन्दिर –** दैलेखनगरमा प्राचीन कालमा स्थापित गणेशमन्दिर रहेको छ ।

२. **धूलीश्वर मन्दिरको गणेशमूर्ति –** बडलम्जी गा.वि.स. वडा नं. ८ अन्तर्गत लाहोरे खोलाको दोभानमा धूलीश्वर महादेवमन्दिर रहेको छ । यहाँ शिव-पार्वतीका मूर्तिहरूका साथै गणेशमूर्ति पनि रहेको छ ।

३. **सिद्धेश्वर महादेवमन्दिरको गणेशमूर्ति –** नाउले कटुवाल गा.वि.स. वडा नं. ९ दुङ्गेश्वर खोलाको किनारमा सिद्धेश्वर–महादेवमन्दिर रहेको छ । यस मन्दिरको बाहिर गणेशमूर्ति रहेको छ ।

**ची ) सुर्खेत**

१. **चिसापानीको गणेशमन्दिर –** यो मन्दिर वीरेन्द्रनगर नगरपालिका वडा नं. ५ को चिसापानी भन्ने ठाउँमा पर्दछ । यसको निर्माण हालै मात्र जनसहभागिताबाट भएको हो । यस मन्दिरमा गणेशपाञ्चायनको शिलामय मूर्ति स्थापना गरिएको छ । यस मन्दिरमा दैनिक नित्य पूजाआराधना गरिन्छ ।

२. **लाटीकोइली मन्दिरको गणेशमूर्ति –** लाटीकोइली गा.वि.स. वडा नं. १ मा लाटीकोइलीमन्दिर रहेको छ। यसलाई शक्तिपीठ पनि मानिन्छ । मन्दिरको दायाँबायाँ भागमा सरस्वती, शिव र गणेशका मूर्तिहरू पनि रहेका छन् । यसैगरी यस जिल्लाका अनेक मन्दिरहरूमा गणेशका मूर्तिहरू पाइन्छन् ।

चु ) बाँके

**आदर्शनगरको गणेशमन्दिर** – बाँकि जिल्ला आदर्श नगरमा गणेशमन्दिर रहेको छ । यहाँ प्रत्येक शनिवार तथा मङ्गलवार दर्शनार्थीहरूको घुइँचो लाग्दछ । यस जिल्लाका अनेक मन्दिरहरूमा अङ्गमूर्तिका रूपमा गणेशका मूर्तिहरू पाइन्छन् ।

चू ) बर्दिया

१. **गणेशबाबामन्दिर** – गणेशबाबामन्दिर राजापुर बजारदेखि दक्षिणपूर्वी भागमा रहेको छ । गुम्बज शैलीको पश्चिम फर्केको र गजुर भएको यस मन्दिरभित्र पहिले गणेशको शिरको आकार बन्न गएको पीपलको जरा रहेको छ । त्यसैलाई गणेश मानी पूजा गर्दै आएको पाइन्छ । यस मन्दिरमा श्रीपञ्चमीका दिन दर्शनार्थीहरूको भीड लाग्ने गर्दछ ।

२. **राजापुरको गणेशमन्दिर – बर्दिया** जिल्लाको राजापुर बजारमा गणेशमन्दिर रहेको छ । यसैगरी यस जिल्लाका अनेक मन्दिरहरूमा अङ्गमूर्तिका रूपमा गणेशका मूर्ति पाइन्छन् ।

चे ) बझाङ

**सहस्त्रलिङ्गको गणेशमन्दिर** – बझाङको सहस्त्रलिङ्ग भन्ने स्थानमा गणेशमन्दिर रहेको छ । यसैगरी यस जिल्लाका अनेक देवीदेवताका मन्दिरहरूमा अङ्गमूर्तिका रूपमा गणेशका मूर्ति रहेका छन् ।

चै ) बाजुरा

बाजुरा जिल्लाका विभिन्न देवीदेवताका मन्दिरहरूमा अङ्गमूर्तिका रूपमा श्रीगणेशका मूर्तिहरू पाइन्छन् ।

चो ) अछाम

१. **विनायक गणेशमन्दिर** – अछाम जिल्लाको घोडाकन्ने भन्ने स्थानदेखि उत्तरतर्फ भव्य एवं विशाल विनायक-गणेशमन्दिर रहेको छ ।

२. **गणेश पञ्चदेवल** – यो पञ्चदेवलमन्दिर अछाम जिल्लाको घोडाकन्ने भन्ने डाँडामा रहेको छ । वरिपरि चारवटा देवल र बीचमा चारैतिर चौतारी बनाएर गणेशदेवल निर्माण गरिएको छ । यस पञ्चदेवलको निर्माण सिञ्जाली राजाका छोरा अक्षय मल्लले वि.सं. १३३९ मा गरेका हुन् ।

३. **वैजनाथ शिवालयका गणेशमूर्तिहरू** – वैजनाथ शिवालयमा लक्ष्मी, दुर्गा, गणेश र सूर्यका मूर्तिहरू छन्। फलकमूर्तिहरूमध्ये भैरव र गणेशका मूर्ति एउटै फलकमा रहेका छन् ।

४. **विष्णुमन्दिरको गणेशमूर्ति** – वैजनाथ गा.वि.स.को वैजनाथ धाममा रहेको विष्णुमन्दिरमा भैरवसहित गणेशको आसनमूर्ति रहेको छ । यस अतिरिक्त यस जिल्लाका अनेक मन्दिरहरूमा गणेशका मूर्तिहरू पाइन्छन् ।

चौ ) डोटी

**शैलेश्वरीमन्दिर-परिसरको गणेशमन्दिर** – डोटी जिल्लाको सदरमुकाम दिपायलको सिलगढी बजारमा

शिलाको मूर्तिले सम्पन्न श्रीगणेशमन्दिर रहेको छ । यस जिल्लाका अनेक मन्दिरहरूमा अङ्गमूर्तिका रूपमा गणेशका मूर्तिहरू रहेका छन् ।

### चं ) कैलाली

**कैलासेश्वर-परिसरको गणेशमन्दिर** – टीकापुर नगरपालिकाअन्तर्गत टीकापुरमा कैलासेश्वर महादेवमन्दिरको परिसरमा गणेशमन्दिर रहेको छ । यस जिल्लाका शिवमन्दिर आदि अनेक देवस्थलहरूमा अङ्गमूर्तिका रूपमा गणेशका मूर्तिहरू पनि पाइन्छन् ।

### चः ) दार्चुला

१. **गोकुलेश्वरको गणेशमूर्ति –** दार्चुलाको सदरमुकामबाट करीब ६१ कि.मि. टाढा गोकुले भन्ने ठाउँमा गोकुलेश्वर-महादेवमन्दिर छ । यस मन्दिरमा शिव-पार्वतीका साथै गणेशमूर्ति पनि रहेको छ ।

२. **लटीनाथ मन्दिरको गणेशमूर्ति –** लटीनाथ गा.वि.स. वडा नं. ७ मा चौलानी नदीको पूर्वी किनारमा लटीनाथ महादेवको मन्दिर छ । यस मन्दिरभित्र शिवलिङ्ग र गणेशमूर्ति रहेको कुरा स्थानीयहरूको भनाइ छ ।

### छ ) बैतडी

बैतडी जिल्लाका विभिन्न देवीदेवताका मन्दिरहरूमा अङ्गमूर्तिका रूपमा श्रीगणेशका मूर्तिहरू पाइन्छन् ।

### छा ) डडेलधुरा

गन्यापधुरा ( **गणेशमन्दिर** ) – गणेशमन्दिरको रूपमा मानिने यो मन्दिर सदरमुकामबाट करीब १५ कि.मि. पूर्व गणेशपुर गा.वि.स.अन्तर्गत पर्दछ । गणेशमूर्तिको रूपमा रहेको शिलालाई ताम्रपत्रले छोपेको छ । यहाँ सदा सर्पले रक्षा गर्ने र त्यहाँको ढुङ्गा झिक्न खोजेमा सर्पले झिक्न नदिने भन्ने भनाइ छ । यस जिल्लामा रहेका अन्य मन्दिरहरूमा अङ्गमूर्तिका रूपमा गणेशका मूर्ति रहेका छन् ।

### छि ) कञ्चनपुर

**सिद्धनाथ मन्दिरको गणेशमूर्ति –** महेन्द्रनगर नगरपालिका वडा नं. ४ ब्रह्मदेव बजारमा रहेको सिद्धनाथमन्दिरमा पित्तलको श्रीगणेशमूर्ति रहेको छ । यस जिल्लाका अनेक देवीदेवताका मन्दिरहरूमा अङ्गमूर्तिका रूपमा श्रीगणेशका मूर्ति रहेका छन् ।

## १.२ भारतका गणेशमन्दिर, गणेशतीर्थ र गणेशमूर्ति

भारतमा अनेक गणपतितीर्थ , गणपतिमन्दिर र गणपतिमूर्ति रहेका छन् । तीमध्ये प्रमुख तीर्थ, मन्दिर एवं मूर्तिहरूको नाम निरूपणका लागि यो प्रकरण प्रारम्भ गरिएको छ ।

### १. मङ्गलमूर्ति गणेश

पूनाभन्दा एघार माइल टाढा रहेको मङ्गलमूर्ति क्षेत्रमा मङ्गलमूर्ति भगवान् श्रीगणेशको मूर्ति छ । यो

मन्दिर ज्यादै प्रसिद्ध भएकाले यहाँ दर्शनार्थी यात्रीहरूको घुइँचो लाग्ने गर्दछ । यो गणेशमन्दिर महाराष्ट्रका अष्टविनायकहरूमध्ये एक हो ।

२. **श्रीवरदविनायक**

वैनायक सम्प्रदायका प्रवर्तक महर्षि गृत्समदद्वारा स्थापित श्रीवरदविनायक महाराष्ट्रका अष्टविनायकमध्ये एक हुन् । गृत्समदले यहाँ रहेर गणेशको आराधना गरी ब्रह्मत्व र ऋषित्व प्राप्त गरेका कारण यो क्षेत्र वरदविनायक क्षेत्रका रूपमा ज्यादै प्रसिद्ध छ ।

३. **वरविनायक अथवा विवाहविनायक**

महर्षि कण्वद्वारा स्थापित वरविनायक अथवा विवाहविनायकको प्रतिमा टिटवालानामक स्थानमा रहेको छ । यिनै विनायकको अनुग्रहबाट शकुन्तलाले राजा दुष्यन्तलाई पतिका रूपमा प्राप्त गरेकी थिइन् । यस कारण यी गणेशलाई वरविनायक अथवा विवाहविनायक भनिन्छ ।

४. **ढोल्या गणेश अथवा विशाल गणेश**

सतारा जिल्लाअन्तर्गत 'बाई' नामक स्थानमा ढोल्या गणेशको विशाल मन्दिर रहेको छ । यस मन्दिरको पछिल्लो भाग माछाको आकारको छ । मूर्तिको विशालताका कारण यहाँका गणेशलाई ढोल्या गणेश भनिन्छ ।

५. **चित्रकूट-गणेश**

चित्रकूट गणेशको मन्दिर मराठवाडाका सिद्ध स्थानहरूमध्ये एक हो । महाराष्ट्रका अष्ट विनायकहरूसमान यसको महिमा बताइएको छ । यहाँ शिवलिङ्गमाथि श्रीगणेशको स्वयम्भू प्रतिमा रहेको छ । यो प्रतिमा सिन्दूरचर्चित छ । मानिसहरू प्रतिदिन यस प्रतिमाको तिलबराबर वृद्धि हुने कुरा बताउँछन् ।

६. **विरूपाक्षमन्दिर र विशाल गणेशमूर्ति**

विजयनगरको प्राचीन राजधानी हम्पीमा रहेको विरूपाक्ष मन्दिरको आग्नेय कोणमा एउटा विशाल मण्डप छ । त्यसमा श्रीगणेशको बाह्र हात अग्लो विशाल प्रतिमा रहेको छ । त्यहाँ श्रीगणेशको दर्शनका लागि यात्रीहरूको घुइँचो लाग्ने गर्दछ ।

७. **हेरम्ब गणपति**

गणेशको पहिले विवाह भएका कारण स्वामी कार्तिकेय र श्रीगणेशमा विवाद भयो । रुष्ट भएका कार्तिकेय कैलासवास त्याग गरी दक्षिण भारततर्फ आए । त्यहाँ तिनले क्रौञ्चपर्वतमा आफ्नो आवास बनाए। यो स्थान सुण्डूरभन्दा ६ माइल टाढा रहेको छ । यहाँ हेरम्ब गणपति र स्वामी कार्तिकेयका बेग्लाबेग्लै मन्दिर रहेका छन् ।

८. **सिद्धगणपति महाबलेश्वर मन्दिर**

हुबलीभन्दा सय माइल टाढा गोकर्ण क्षेत्रका साना-साना पर्वतहरूको माझमा भगवान् शङ्करको

आत्मत्त्व लिङ्ग रहेको छ । गर्भगृहबाहिर सभामण्डपमा पार्वती र गणेशका प्रतिमाहरू छन् । त्यहीं नै सिद्धगणेशको विशाल प्रतिमा रहेको छ । यस प्रतिमाको मस्तकमा रावणद्वारा गरिएका प्रहारका चिह्न रहेका छन् । सिद्ध गणेशको दर्शनपछि मात्र भगवान् शङ्करको आत्मतत्त्वलिङ्गको दर्शन गर्ने विधान रहेको छ ।

**९. जय सिद्धविनायक**

जहिरावाद रोड नजिकै रेजंतलमा जय सिद्धविनायकमन्दिर रहेको छ । यो मन्दिर पर्वतको फेंदीमा छ। स्थानीय मान्यताअनुसार वि.सं. १७२३ पौषशुक्ल विनायकी चतुर्थीका दिन गणेशभक्त श्रीशिवराम महाराज चञ्चल गिरिले पूजा गर्दा जय सिद्धविनायक भनी भुइँमा हात राखेका थिए । तत्काल नै त्यहाँ भुइँ फुटेर जय सिद्धविनायक महागणपतिको मूर्ति प्रकट भएको थियो । यस मन्दिरलाई सिद्धि प्रदान गर्ने गणेशमन्दिरको रूपमा लिइन्छ ।

**१०. स्वयम्भू श्रीमहागणपति**

केरल प्रान्तको मद्रास-मङ्गलौर रेलवेलाइनमा मसरागोड स्टेशन नजिकै रहेको माधुरेनामक स्थानमा विशाल स्वयम्भू-श्रीमहागणपतिमन्दिर छ । यस मन्दिरमा रहेको गणेशप्रतिमालाई स्वयम्भूप्रतिमा मानिएको छ । आजभन्दा लगभग ८ सय वर्षअघि एउटी अनुसूचित जातिकी महिलाले घाँस काटिरहेको समयमा अचानक तिनको हँसिया त्यहीं दबेर रहेको प्रतिमामा ठोकिन पुग्यो। त्यसबाट रगतका धारा बग्न थाले । ती महिला चकित भइन् । मानिसहरू जम्मा भए र त्यहाँ श्रीगणेशको त्यस प्रतिमालाई विधिपूर्वक स्थापना गरियो । कालान्तरमा त्यहाँ विशाल मन्दिर निर्माण गरी आराधना गर्न थालियो । स्थानीय मानिसहरू त्यस बेलादेखि अहिलेसम्म निरन्तर प्रतिमाको आकार बढ्दै गएको कुरा बताउँछन् । केरलक्षेत्रमा यस मन्दिरको ठूलो महिमा रहेको छ।

**११. फलदाता गणेश**

गोदावरी नदीको तटमा फलदाता गणपतिको दक्षिणाभिमुख मन्दिर रहेको छ । यहाँ स्थापित श्रीगणपति प्रत्यक्ष फलदाताका रूपमा प्रसिद्ध र लोकवन्दित हुनुहुन्छ ।

**१२. महागणपति**

कर्नाटक प्रान्तको कुरुमडे स्थानमा एउटा विशाल गणेशमन्दिर रहेको छ । यसमा श्रीगणपति र सुब्रह्मण्यम्का विशाल प्रतिमा रहेका छन् । गणेशको प्रतिमासामु उहाँको वाहन मूसाको पनि विशाल प्रतिमा रहेको छ ।

**१३. बालब्रह्मचारी गणेश**

कर्नाटकको इडगुञ्जीमा महागणपतिको दुई हाते र सर्पहरूद्वारा बेरिएको विलक्षण प्रतिमा रहेको छ । यस प्रतिमालाई बालब्रह्मचारी गणेशको प्रतिमा भनी आराधना गरिन्छ ।

**१४. गणेशमन्दिर**

वेचराजीबाट अठार माइल टाढा मोढेरा गाउँको दक्षिण भागमा श्रीगणेशको मन्दिर रहेको छ । यहाँ सिद्धि

र बुद्धिनामक आफ्ना अर्धाङ्गिनीहरूका प्रतिमाहरूका साथ श्रीगणेशको आकर्षक र भव्य प्रतिमा रहेको छ ।

**१५. ढुण्ढिराज गणेश**

बडौदामा श्रीगणेशका अनेक मन्दिर रहेका छन् । तीमध्ये ढुण्ढिराज गणपति गणेशको मन्दिर शिल्पकला, वैभव र प्रभावको दृष्टिबाट अत्यन्त प्रसिद्ध छ । यसका साथै त्यहाँ नजिकै रहेको सिद्धनाथ-गणपतिमन्दिर पनि प्रसिद्ध छ ।

**१६. गणेशवट**

गुजरातमा नवसारी सहर नजिकै ठूला-ठूला वरका वृक्षहरूको झाडी रहेको छ । त्यसैको माझमा श्रीगणेशमन्दिर छ । त्यसमा उहाँको एक फूट अग्लो प्रतिमा रहेको छ । प्रतिमाको सूँढ बायाँतर्फ फर्किएको छ ।

**१७. फणी गणपति**

खम्भातको गणेशमन्दिरमा एउटा भव्य र अग्लो गणेशमूर्ति रहेको छ । यो मूर्ति विलक्षण छ । चार हाते मूर्तिका चारैतर्फ फणधारी सर्पहरू रहेका छन् । यस मन्दिरलाई ज्यादै प्राचीन मन्दिर मानिन्छ ।

**१८. चिन्तामनगणपति**

उज्जैन नजिकै एउटा प्राचीन श्रीगणेशमन्दिर रहेको छ । मनले चिताएका कुरा पुऱ्याउने गणपतिका रूपमा यहाँका गणेश प्रसिद्ध हुनुहुन्छ । यहाँ चैतको प्रत्येक बुधबारका दिन मेला लाग्दछ ।

**१९. सिद्धविनायक**

शोण-नर्मदाको उद्गमक्षेत्र अमरकण्टकको गहन वनमा महर्षि भृगुको आश्रम रहेको छ । त्यहाँ रहेको गणेशमन्दिरमा सिद्धविनायकको दुई हाते प्रतिमा रहेको छ । उक्त प्रतिमाका दायाँ-बायाँ ऋद्धि र सिद्धि रहेका छन् ।

**२०. उज्जैनका महागणपति र षड्विनायक**

द्वादश ज्योतिर्लिङ्गहरूमा प्रसिद्ध महाकालेश्वर ज्योतिर्लिङ्गको समीपमा भगवान् गणेशको विशाल मूर्ति रहेको छ । ती गणेशलाई महागणपति भनिन्छ । यसैगरी उज्जैन क्षेत्रका ६ विनायक पनि अत्यन्त प्रसिद्ध छन् । तिनीहरूको नामावली यसप्रकार छ – १. मोदीविनायक, २. प्रमोदविनायक (लड्डूविनायक), ३. सुमुखविनायक (स्थिरविनायक अथवा थलगणपति), ४. दर्मुखविनायक, ५. अविघ्नविनायक र ६. विघ्नविनायक ।

**२१. चमत्कारी श्रीगणेश**

जोधपुरअन्तर्गत विलाडानगरको उत्तरी भूभागमा प्राचीन ऐतिहासिक स्थान रहेको छ । यहाँ प्राचीन समयमा विशाल गणेशमन्दिर रहेको थियो । इतिहासको कुनै कालखण्डमा त्यो मन्दिर ध्वस्त भयो । अहिले त्यसका भग्नावशेष यत्र तत्र छरिएर रहेका छन् । यसो हो तापनि मानिसहरू यहाँ भगवान् गणेशको आराधना गर्न जान्छन् । यहाँका गणेश फलदाता र चमत्कारी मानिनुहुन्छ । यहाँ प्राय: रात्रिजागरण र गणेशाराधना हुने गर्दछ ।

२२. **गणेशस्तम्भका श्रीगणेश**

जोधपुर नजिकै चटियालानामक स्थानमा एउटा प्राचीन शिलास्तम्भ रहेको छ । यसमा श्रीगणेशको स्तुति उत्कीर्ण छ । यो ई. ८६२ को अभिलेख हो । स्तम्भको शिखरमा ४ दिशातर्फ फर्किएर रहेका गणेशका चार मूर्तिहरू छन् ।

२३. **सिद्ध गणेशमन्दिर**

मेवाडका इतिहासप्रसिद्ध राणा हम्मीरद्वारा आराधित सिद्ध गणेशमन्दिर सवाई माधोपुरको पर्वतशिखरमा रहेको छ ।

२४. **सिद्धिप्रद भगवान् गणेश**

रणथम्भोर दुर्गमाथि सिद्धिदाता भगवान् गजाननको प्रसिद्ध तीर्थ रहेको छ । मुस्लिम शासनकालमा यहाँ रहेको गणेशमन्दिरको प्रतिमा छिन्नभिन्न पारिए तापनि भगवान् गजाननको श्रीविग्रहको सूँढ भने अक्षुण्ण छ । हातमा चमर लिएका ऋद्धि र सिद्धिका प्रतिमाहरू साबुत छन् । यहाँ लाखौं तीर्थयात्री दर्शन गर्न आउँछन् । यहाँ आउने भक्तहरूका मनका कामना पूर्ण हुन्छन् भन्ने प्रबल जनमान्यता रहेको छ ।

२५. **नागौर गणपति**

नागौर दुर्गमा सातौं शताब्दीमा निर्मित गणपतिको विशाल एवं सुन्दर मूर्ति रहेको छ । यहाँ प्राचीन कालदेखि नै श्रीगणपतिको आराधना गर्ने परम्परा रहिआएको छ ।

२६. **लीलागणेश**

अमृतसर-पठानकोट लाइनमा बटालाभन्दा चार माइल टाढा प्रसिद्ध गणेशमन्दिर रहेको छ । यस स्थानलाई श्रीगणेशको लीलाभूमि मानिन्छ । स्वामी कार्तिकेय र श्रीगणेशमा श्रेष्ठताको विवाद हुँदा शङ्करले श्रेष्ठता प्रमाणित गर्न पृथ्वीभ्रमणको आदेश दिनुभयो । त्यस बेला श्रीगणेशले यसै क्षेत्रमा रहेर आफ्ना माता-पिता पार्वती र शङ्करको परिक्रमा गर्नुभएको थियो । यसै कारण उहाँ विजयी हुनुभयो । स्थानीय मान्यताअनुसार यस क्षेत्रमा नै श्रीगणेशको त्यो लीला सम्पन्न भएको थियो ।

२७. **छिन्नमस्तक गणपति**

भारतको उत्तराञ्चलको केदारनाथ मार्गमा त्रियुगी नारायण नजिकै छिन्नमस्तक-गणपतिमन्दिर रहेको छ । महादेवले यहीं नै गणेशको शिर छिन्न गराउनुभएपछि हात्तीको शिर जोडेर जीवित गराउनु भएको थियो भन्ने मान्यता रहेको छ ।

२८. **गणेशगुफा**

बदरीनाथभन्दा दुई माइल टाढा माणा गाउँ नजिकै व्यासगुफाको समीपमा गणेशगुफा रहेको छ । यहाँ श्रीगणेशको प्राकृतिक पाषाणमूर्ति रहेको छ । विद्वान्हरूको भनाइअनुसार यस गुफामा रहेर श्रीगणेशले व्यासोक्त महाभारतलाई लिपिबद्ध गर्नुभएको थियो।

२९. **मोटा गणेश**

वृन्दावनमा कात्यायनी मन्दिर नजिकै श्रीगणेशको अत्यन्त सुन्दर एवं भव्य श्रीविग्रह रहेको छ । यो श्रीविग्रह सिद्धविनायकका नामबाट प्रसिद्ध छ ।

३०. **बडा गणेश**

ओङ्कार क्षेत्र मानिएको प्रयागमा गङ्गातटमा रहेको कमलनाल तीर्थ र दशाश्वमेघ महादेवको समीपमा प्राचीन विशाल गणेशप्रतिमा रहेको छ । यो प्रतिमा बडा गणेशको नामबाट प्रसिद्ध छ ।

३१. **बडा मन्दिरका बडा गणेश**

विहार शरीफको बडा मन्दिरमा भगवान् गणेशको सङ्गमरमरद्वारा निर्मित आकर्षक एवं विशाल मूर्ति रहेको छ । यी गणेशलाई अत्यन्त प्रभावशाली मानिएकाले यहाँ दर्शनार्थीहरूको घुइँचो लाग्ने गर्दछ ।

३२. **महाविनायक मन्दिर**

कटक जिल्लामा प्राचीन महाविनायकमन्दिर र प्राचीन तीर्थ रहेका छन् । भगवान् शङ्करको विश्रामभूमि मानिएको यस तीर्थको पौराणिक महत्त्व छ ।

३३. **षड्गणपति विग्रह**

जगन्नाथ पुरीमा अनेक गणेश विग्रह छन् । तीमध्ये ६वटा गणपति विग्रहको अत्यन्त अधिक मान्यता रहेको छ । ती यस प्रकार छन् - १. कर्नाटकगणपति, २. नृत्यगणपति, ३. कल्पगणपति, ४. चारगणपति, ५. पञ्चविनायक र ६. मणिकर्णिकागणेश।

३४. **सिद्धविनायक**

कटकदेखि पूर्व दिशामा नाभिगया क्षेत्रअन्तर्गत याजपुर अथवा यागपुर रहेको छ । यहाँ प्राचीन समयमा ब्रह्माले यज्ञ गरेका कारण यसलाई यागपुर भनिन्छ । यहाँ वैतरणीनदीको दशाश्वमेध घाटमा रहेको एउटा मन्दिरमा सिद्धविनायकप्रतिमा रहेको छ ।

३५. **काशीका छपन्न विनायक**

काशीमा श्रीगणेशका विभिन्न नामबाट ५६ श्रीविग्रह रहेका छन् । तिनीहरूको पुराणमा गणेश शीर्षकअन्तर्गत स्कन्द पुराणको वर्णन गर्दा नामावली उल्लेख गरिसकिएको छ । यहाँ भारतका केही प्रसिद्ध गणपतिक्षेत्र, तीर्थ, मन्दिर एवं मूर्तिहरूको विवरण प्रस्तुत गरिएको छ । कन्याकुमारीदेखि काश्मीरसम्म र कच्छदेखि कामरूपसम्म फैलिएको भारतमा हजारौं साना-ठूला गणेशमन्दिर र गणेशमूर्ति रहेका छन् । भारतमा शिव, शक्ति, विष्णु आदि देवताहरूका मन्दिरहरूमा अङ्गरूपमा रहेका अनगिन्ती गणेशप्रतिमाहरूको वर्णन सम्भव छैन । भारतमा ईसाको प्रथम शताब्दीदेखि यता निर्माण गरिएका प्रतिमाहरूको बाहुल्य छ । वास्तवमा भारतको दक्षिण प्रान्तमा श्रीगणेश परब्रह्मरूप मानिनु भएकाले उहाँका अनगिन्ती मन्दिर र प्रतिमा रहेका छन्। त्यहाँ उच्चकोटिको गणेशाराधनाका साथै विशिष्ट शैलीमा गणेशोत्सवको आयोजना पनि गरिन्छ ।

## १.३ नेपाल-भारतबाहिरका गणेशमन्दिर, गणेशतीर्थ र गणेशमूर्ति

श्रीगणेश नेपाल, भारत एवं जम्बूद्वीपका मात्र देवता नभई विश्वका नै चमत्कारी देवता हुनुहुन्छ । उहाँ कुनै धर्म, जाति र देशका मात्र देवता नभई मानव, असुर एवं देवताका पनि देवता हुनुहुन्छ । भारतलगायत विश्वका विभिन्न देशहरूमा पाइने गणेशमन्दिर, गणेशतीर्थ र गणेशमूर्तिहरूले उहाँलाई वर्ग, वर्ण, जाति, देश र कालको सीमाबाहिर रहनुभएका विश्वदेवताका रूपमा चिनाउँछन् । सन् १९४७ मा भारतबाट अलगिएका देशहरू बङ्गलादेश र पाकिस्तानमा पनि गणेशमन्दिर र मूर्तिहरूको व्यापक अस्तित्वलाई नकार्न सकिंदैन । यहाँ विभिन्न देशमा रहेका प्रमुख मन्दिर र मूर्तिको विषयमा मात्र विवरण प्रस्तुत गरिंदैछ तापनि यसले ओङ्काररूप श्रीगणेशको सार्वदेशिक र सार्वकालिक महत्त्व उजागर हुनेछ ।

### १. मलयद्वीपपुञ्ज

मलयद्वीप पुञ्जमा श्रीगणेशका धातुनिर्मित र प्रस्तरनिर्मित सयौं गणेशप्रतिमाहरू प्राप्त भएका छन् ।

### २. बालीद्वीप

बालीको जमवरननामक स्थानमा गणेशका उभिएका मूर्तिहरू पाइएका छन् । यहाँ गणेशलाई विघ्नेशको सट्टा पिएन भनिन्छ ।

### ३. थाइल्याण्ड

थाइल्याण्ड(श्याम) देशमा गणेशका अनेक मूर्ति प्राप्त भएका छन् । ती मूर्तिहरू कलात्मक र सुन्दर छन् ।

### ४. कम्बोडिया अथवा हिन्दचीन

कम्बोडियामा गणेशलाई केनेश भनिन्छ । यहाँको आसनमुद्राको कांस्यमूर्ति विख्यात छ । यहाँ अनेक गणेशमूर्ति पाइन्छन् ।

### ५. चीन

चीनमा विनायकका रूपमा श्रीगणेशको प्रवेश भएको थियो । त्यहाँ गजमुख गणेशका अनेक प्रतिमा उपलब्ध छन् । चीनको जुनहु प्रान्तमा गुफाको भित्तामा अजन्ता शैलीमा गणेशका मूर्ति कुँदिएका छन् । कुङ्ग हिंस एन गुफामा सं. ५८८ मा निर्मित विनायकमूर्ति रहेको छ । त्यसमा हस्तिराजको अमानुष मूर्ति भन्ने वाक्य कोरिएको छ । चीनमा गणेश विनायक र मागितेनका नामबाट चिनिनु हुन्छ । तिब्बतमा प्रत्येक मठका अधीक्षकका रूपमा विनायकको पूजा गर्ने परम्परा रहिआएको छ ।

### ६. अमेरिका

अमेरिकामा लम्बोदर गणेशको मूर्ति प्राप्त भएको छ । कोलम्बसद्वारा अमेरिकाको आविष्कारभन्दा पहिले नै यहाँ गणेशका मूर्तिहरू प्राप्त भएको कुरा बताइएको छ । अमेरिकाको टेक्सास नगरमा हालै नेपालीहरूद्वारा गणेशमन्दिरको निर्माण गरिएको छ ।

### ७. यूनान

यूनानमा ओरेनसको नामबाट गणेशको आराधना गरिन्छ । हिन्दू धर्ममा प्रतिपादित अरुणास्य र ओरेनसको समानता प्रतीत हुन्छ ।

## ८. इरान

इरानमा पारसीहरूले अहुरमजदा नामबाट गणेशको उपासना गर्दछन् । अहुरमजदाको लोकोत्तर शक्तिको विषयमा जेन्दावस्ताका आयतहरूमा प्रकाश पारिएको छ । वास्तवमा अहुरमजदा असुरमदहा शब्दको अपभ्रंश हो।

## ९. मिश्र

मिश्रका ऐतिहासिक विद्वान् हर्मिजको भनाइअनुसार एकटोन देवता बुद्धिका अधिष्ठाता हुन् र सबै देवताहरूमा प्रथम देवता हुन् । एकटोन शब्दको प्रकृति र एकटोनको विशेषतालाई मनन गर्दा एकटोन शब्द हिन्दूधर्ममा प्रतिपादित गणेशको एकदन्त नामको अपभ्रंश हो भन्न सकिन्छ ।

## १०. जापान

जापानमा परापूर्वदेखि गणेशपूजनको परम्परा रहिआएको छ । त्यहाँको जिङ्गोजी विहारमा गणेशको मूर्ति रहेको छ । प्रत्येक वर्ष त्यहाँ आई जापानीहरूले पूजा गर्दछन् । यसैगरी मन्त्रयानी विहारहरूमा पनि अनेक गणेशमन्दिर रहेका छन् । जापानी बौद्धसाहित्यमा गणेशको स्वरूप र उपासनाका विषयमा विस्तृत प्रकाश पारिएको छ । जापानको कोवो दाइशी नाम विद्वान्ले १९ औं शताब्दीमा चीनका बौद्धाचार्यहरूसँग शिक्षा लिएर विनायकपूजनको परम्परा बसाएका हुन् । अहिले जापानको शिङ्गवैन सम्प्रदायमा पनि विनायकपूजाको प्रचलन रहेको छ ।

## ११. जावा

जावामा नदीहरूका घाटी र अन्य प्रसिद्ध स्थानहरूमा गणेशका मूर्तिहरू स्थापित छन् ।

## १२. बेलायत

वर्तमान युगमा बेलायतमा बसोबास गर्ने हिन्दूहरूले बेलायतमा गणेशमन्दिर बनाई गणेशोत्सव मनाउने गरेका छन् । महाराष्ट्रमा गणेशोत्सव हुँदा बेलायतमा पनि लगभग दुई हप्ता गणेशपूजन गरी गणेशोत्सव मनाउँदै त्यहाँको टेम्स नदीमा गणेशमूर्तिहरूलाई विसर्जित गर्ने परम्परा बसाइएको छ ।

## १३. अन्य बाहिरी देश

माथि बताइएका देशहरूमा जस्तै तुर्किस्तान, बोर्नियो, उत्तरी मङ्गोलिया, श्रीलङ्का र बर्मामा पनि गणेशका मूर्ति पाइन्छन् । यसका साथै हिन्दूहरूको स्थायी बसोबास भएका सबै मुलुकहरूमा अहिले आएर गणेशपूजा प्रचलित भएको छ ।

श्रीगणेशको व्यापक वन्दनीयता स्पष्ट गर्न नेपाल, भारत र अन्य देशहरूमा रहेका गणेशमन्दिर एवं मूर्तिहरूको प्राप्त सूचनाको आधारमा सङ्क्षिप्त विवरण प्रस्तुत गरिएको छ । यतिमात्रले पनि श्रीगणेश लोकप्रसिद्ध विश्वव्यापी देवता हुनुहुन्छ भन्ने कुरा प्रमाणित हुन्छ । सनातनेतर जैन र बौद्धधर्मका अनुयायीहरूले सनातनीहरूसरह गणेशको आराधना गर्दछन् भने अन्य कतिपय धर्मावलम्बीहरूले पनि गणेश, असुरमदहाजस्ता नामहरूलाई क्यानेट, अहुरमज्दा आदि नामबाट गजवदन र सिद्धिसदन श्रीगणेशको आराधना गर्ने गरेको तथ्य पनि स्मरणीय छ । उक्त विवरणबाट उत्तरी मङ्गोलियादेखि दक्षिण बालीसम्म र पूर्वको जापानदेखि पश्चिम अमेरिकासम्म विश्वका अनेक भागमा भिन्न भिन्न रीतिबाट गणेशपूजनको परम्परा रहेको तथ्य प्रमाणित हुन्छ ।

## परिशिष्ट - दुई

# नेपालीभाषानुवादसहित गणपति-अथर्वशीर्षउपनिषत्-सन्दर्भ

गणेश अथर्वशीर्ष सद्य उपकारक वैदिक मन्त्रमाला हो । महापापबाट मुक्ति, सुखप्राप्ति, विघ्नविहति, विद्याप्राप्तिजस्ता उद्देश्यपूर्तिका लागि साधकले यस मन्त्रमालाको नित्य पाठ अथवा जप गर्नुपर्दछ । यस मन्त्रमालाको उच्चारण गर्दै दूर्वाङ्कुर, लावा, लड्डू र साज्य समिधाद्वारा हवन गर्ने साधकका इच्छाहरू पूर्ण हुन्छन् । यो अमोघ मन्त्र हो । सदाचारी, सुपात्र व्यक्तिले सद्गुरुबाट दीक्षा लिएपछिमात्र यसको उपयोग गर्नुपर्दछ ।

**ॐ भद्रं कर्णेभिः शृणुयाम देवा भद्रं पश्येमाक्षभिर्यजत्राः ।**
**स्थिरैरङ्गैस्तुष्टुवाँसस्तनूभिर्व्यशेम हि देवहितं यदायुः ।।**

हे देवतागण ! हामीहरूले व्रत साधकका रूपमा आफ्ना कानद्वारा मङ्गलमय शब्दको श्रवण गरौं, यज्ञका साधक भई मङ्गलमय रूपको दर्शन गरौं र हामीहरू सुस्थिर अङ्ग-प्रत्यङ्ग एवं शरीरद्वारा तपाईहरूको स्तुति गर्दै तपाईहरूकै हितसाधक आयुको उपभोग गरौं ।

**स्वस्ति न इन्द्रो वृद्धश्रवाः स्वस्ति नः पूषा विश्ववेदाः ।**
**स्वस्ति नस्ताक्ष्योऽरिष्टनेमिः स्वस्ति नो बृहस्पतिर्दधातु ।।**
**ॐ शान्तिः शान्तिः शान्तिः ॐ**

चारैतिर कीर्ति फैलाउने इन्द्र हाम्रा लागि मङ्गलदायक होऊन्, सर्वज्ञ सूर्य हाम्रा लागि मङ्गलदायक होऊन् । जसको शक्ति कसैद्वारा परास्त हुँदैन ती विनतानन्दन गरुड हाम्रा लागि मङ्गलदायक होऊन् र विद्यापति बृहस्पति हाम्रा लागि मङ्गलदायक होऊन्। हाम्रा तीन प्रकारका तापहरूको शमन होस् ।

**अथ गणेशाथर्वशीर्षं व्याख्यास्यामः**
अब हामी गणेश-अथर्वशीर्षको व्याख्या गर्नेछौं ।
**ॐ नमस्ते गणपतये । त्वमेव प्रत्यक्षं तत्त्वमसि । त्वमेव**
**केवलं कर्तासि । त्वमेव केवलं धर्तासि । त्वमेव केवलं हर्तासि ।**
**त्वमेव सर्वं खल्विदं ब्रह्मासि । त्वं साक्षादात्मासि नित्यम् ।।१।।**

म तपाई गणपतिलाई नमस्कार गर्दछु । तपाई प्रत्यक्ष तत्त्व हुनुहुन्छ । तपाईंमात्र कर्ता हुनुहुन्छ । तपाईंमात्र धर्ता हुनुहुन्छ। तपाईंमात्र संहारक हुनुहुन्छ । तपाईंमात्र यो विश्वप्रपञ्चका रूपमा हुनुहुन्छ । तपाई साक्षात् नित्य आत्मा हुनुहुन्छ ।

**ऋतं वच्मि । सत्यं वच्मि ।।२।।**

म मधुर यथार्थ भन्दछु । म सत्य भन्दछु ।

**अव त्वं माम् । अव वक्तारम् । अव श्रोतारम् । अव दातारम् ।**
**अव धातारम् । अवानूचानमव शिष्यम् । अव पश्चात्तात् ।**
**अव पुरस्तात् । अवोत्तरात्तात् । अव दक्षिणात्तात् । अव चोर्ध्वात्तात् ।**
**अवाधस्तात् । सर्वतो मां पाहि पाहि समन्तात् ।।३।।**

हे गणपति ! तपाईंले मेरो रक्षा गर्नुहोस् । तपाईंले वक्ताको रक्षा गर्नुहोस् । तपाईंले श्रोताको रक्षा गर्नुहोस् । तपाईंले दाताको रक्षा गर्नुहोस् । तपाईंले धाताको रक्षा गर्नुहोस् । तपाईंले षडङ्गसहित वेदका ज्ञाता आचार्यको रक्षा गर्नुहोस् । तपाईंले शिष्यको रक्षा गर्नुहोस् । तपाईंले पछाडिबाट रक्षा गर्नुहोस् । तपाईंले अगाडिबाट रक्षा गर्नुहोस् । तपाईंले बायाँ भागबाट रक्षा गर्नुहोस् । तपाईंले दायाँ भागबाट रक्षा गर्नुहोस् । तपाईंले माथिबाट रक्षा गर्नुहोस् । तपाईंले तलबाट रक्षा गर्नुहोस् । तपाईंले सबै दिशाबाट र चारैतिरबाट मेरो रक्षा गर्नुहोस् ।

**त्वं वाङ्मयस्त्वं चिन्मयः । त्वमानन्दमयस्त्वं ब्रह्ममयः । त्वं सच्चिदा-**
**नन्दाद्वितीयोऽसि । त्वं प्रत्यक्षं ब्रह्मासि । त्वं ज्ञानमयो विज्ञानमयोऽसि ।।४।।**

तपाईं वाङ्मय र चिन्मय हुनुहुन्छ । तपाईं आनन्दमय र ब्रह्ममय हुनुहुन्छ । तपाईं सच्चिदानन्दरूप अद्वितीय परमात्मा हुनुहुन्छ । तपाईं प्रत्यक्ष ब्रह्म हुनुहुन्छ । तपाईं ज्ञानमय र विज्ञानमय पनि हुनुहुन्छ ।

**सर्वं जगदिदं त्वत्तो जायते । सर्वं जगदिदं त्वत्तस्तिष्ठति ।**
**सर्वं जगदिदं त्वयि लयमेष्यति । सर्वं जगदिदं त्वयि प्रत्येति ।**
**त्वं भूमिरापोऽनलोऽनिलो नभः । त्वं चत्वारि वाक्पदानि ।।५।।**

यो सम्पूर्ण संसार तपाईंबाट पैदा हुन्छ । यो सम्पूर्ण संसार तपाईंबाट पालित हुन्छ । यो सम्पूर्ण संसार तपाईंमा लीन हुनेछ। यो सम्पूर्ण संसार तपाईंमा प्रतीत हुन्छ । तपाईं नै पृथिवी, जल, अग्नि, वायु र आकाश हुनुहुन्छ । तपाईं नै परा, पश्यन्ती, मध्यमा र बैखरीका भेदले चार प्रकारको वाणीका रूपमा हुनुहुन्छ ।

**त्वं गुणत्रयातीतः । त्वं देहत्रयातीतः । त्वं कालत्रयातीतः ।**
**त्वं मूलाधारस्थितोऽसि नित्यम् । त्वं शक्तित्रयात्मकः । त्वां योगिनो**
**ध्यायन्ति नित्यम् । त्वं ब्रह्मा त्वं विष्णुस्त्वं रुद्रस्त्वमिन्द्रस्त्वमग्निस्त्वं**
**वायुस्त्वं सूर्यस्त्वं चन्द्रस्त्वं ब्रह्म भूर्भुवः स्वरोम् ।।६।।**

हे गणपति ! तपाईं सत्त्व, रज र तमो गुणभन्दा पर हुनुहुन्छ । तपाईं स्थूल, सूक्ष्म र कारणशरीरभन्दा पर हुनुहुन्छ । तपाईं भूत, भविष्य र वर्तमानकालभन्दा पर हुनुहुन्छ । तपाईं सधैं मूलाधार चक्रमा विराजमान हुनुहुन्छ । तपाईं प्रभुशक्ति, उत्साहशक्ति र मन्त्रशक्तिले सम्पन्न हुनुहुन्छ । योगीहरूले नित्य तपाईंको नै ध्यान गर्दछन् । तपाईं ब्रह्मा हुनुहुन्छ । तपाईं विष्णु हुनुहुन्छ । तपाईं रुद्र हुनुहुन्छ । तपाईं अग्नि हुनुहुन्छ । तपाईं वायु हुनुहुन्छ । तपाईं सूर्य हुनुहुन्छ । तपाईं चन्द्रमा हुनुहुन्छ । तपाईं सगुण ब्रह्म हुनुहुन्छ । तपाईं निर्गुण त्रिपाद भूः, भूवः, स्वः र प्रणव हुनुहुन्छ ।

**गणादिं पूर्वमुच्चार्य वर्णादिं तदनन्तरम् । अनुस्वारः परतरोऽर्द्धेन्दुलसितं तारेण**
**रुद्धम् एतत्तव मनुस्वरूपम् । गकारः पूर्वरूपम् । अकारो मध्यमरूपम् । अनुस्वार-**
**श्चान्त्यरूपम् । बिन्दुरुत्तररूपम् । नादः संधानम् । संहिता सन्धिः । सैषा गणेशविद्या ।**
**गणक ऋषिः, निचृद् गायत्रीच्छन्दः, गणपतिर्देवता । ॐ गं गणपतये नमः ।।७।।**

सर्वप्रथम गणशब्दको प्रथमाक्षर गकारको उच्चारण गरेपछि वर्णहरूमा प्रथम वर्ण अकारको उच्चारण गर्नुपर्दछ । त्यसपछि अनुस्वारको उच्चारण गर्नुपर्दछ । यसरी अर्धचन्द्रद्वारा सुहाएको जुन 'गं' शब्द तयार भएको छ त्यसलाई अघि र पछिबाट ॐकारले घेरिदिनुपर्दछ । दुबैतिरबाट ॐकारले घेरिएको ॐ गं ॐ जुन स्वरूप छ यही तपाईंको मन्त्रको रूप हो । यस मन्त्रको गकार पूर्व रूप हो। अकार मध्यम रूप हो । अनुस्वार अन्तिम रूप हो । बिन्दु उत्तर रूप हो । नाद सन्धान हो र संहिता सन्धि हो । यसप्रकारको गणेशविद्या रहेको छ । यस विद्याका ऋषि गणक हुन् । छन्द निचृद् गायत्री हो, देवता गणपति हुनुहुन्छ र मन्त्र **गं गणपतये नमः** हो।

**एकदन्ताय विद्महे वक्रतुण्डाय धीमहि । तन्नो दन्ती प्रचोदयात् ।।८।।**

हामीले एकदन्तलाई राम्ररी जान्दछौं र वक्रतुण्डको ध्यान गर्दछौं । भगवान् दन्ती (गणेश) ले हामीलाई त्यस ज्ञान र ध्यानतर्फ प्रवृत्त गराऊन् ।

**एकदन्तं चतुर्हस्तं पाशमङ्कुशधारिणम् । रदं च वरदं हस्तैर्बिभ्राणं मूषकध्वजम् ।।**
**रक्तं लम्बोदरं शूर्पकर्णकं रक्तवाससम् । रक्तगन्धानुलिप्ताङ्गं रक्तपुष्पैः सुपूजितम् ।।**
**भक्तानुकम्पिनं देवं जगत्कारणमच्युतम्। आविर्भूतं च सृष्ट्यादौ प्रकृतेः पुरुषात् परम्।।**
**एवं ध्यायति यो नित्यं स योगी योगिनां वरः ।।९।।**

एकदन्त, चतुर्बाहु, आफ्ना चार हातहरूमा पाश; अङ्कुश; दन्त र वरमुद्रा धारण गर्ने, मूषक चिह्नद्वारा चिह्नित ध्वजाधारी, रक्तवर्ण, लम्बोदर, शूर्पकर्ण, रक्तवस्त्रधारी, अङ्ग-प्रत्यङ्गमा रक्तचन्दनको लेपन गर्ने, राता पुष्पहरूद्वारा पूजित, भक्तकामनापूरक, ज्योतिर्मय, जगत्का कारण, अच्युत, प्रकृति एवं पुरुषभन्दा पर विराजमान, सृष्टिको प्रारम्भमा प्रादुर्भूत पुरुषोत्तम श्रीगणेशको नित्य ध्यान गर्ने योगी योगीहरूमा उत्तम हुन्छ ।

**नमो व्रातपतये, नमो गणपतये, नमः प्रमथपतये, नमस्ते अस्तु**
**लम्बोदरायैकदन्ताय विघ्नविनाशिने शिवसुताय श्रीवरदमूर्तये नमः ।।१०।।**

म व्रातपतिलाई नमस्कार गर्दछु । म गणपतिलाई नमस्कार गर्दछु । म प्रमथपतिलाई नमस्कार गर्दछु । म लम्बोदर र एकदन्तलाई नमस्कार गर्दछु । म विघ्ननाशक, शिवपुत्र वरदमूर्ति श्रीगणेशलाई नमस्कार गर्दछु ।

**एतदथर्वशीर्षं योऽधीते । स ब्रह्मभूयाय कल्पते । स सर्वतः सुखमेधते ।**
**स सर्वविघ्नैर्न बाध्यते । स सर्वमहापापात्प्रमुच्यते । सायमधीयानो दिवसकृतं**
**पापं नाशयति । प्रातरधीयानो रात्रिकृतं पापं नाशयति । सायं प्रातः प्रयुञ्जानोऽ-**
**पापो भवति । सर्वत्राधीयानोऽपविघ्नो भवति धर्मार्थकाममोक्षं च विन्दति ।**
**इदमथर्वशीर्षम् अशिष्याय न देयम् । यदि मोहाद् दास्यति, स पापीयान् भवति ।**
**सहस्रावर्तनाद् यं यं काममधीते तं तमनेन साधयेत् ।।११।।**

जसले यस गणेशाथर्वशीर्षको पाठ गर्दछ त्यो ब्रह्ममय बन्दछ, त्यो सबै प्रकारबाट सुखी हुन्छ, त्यो कुनै प्रकारका विघ्नहरूबाट पनि बाधित हुँदैन र त्यो समस्त पातकहरूबाट मुक्त हुन्छ । सायंकालमा अध्ययन गर्ने अध्येताका दिउँसो गरेका पापहरू नष्ट हुन्छन् । प्रातःकालमा अध्ययन गर्ने अध्येताका रातमा गरेका पापहरू नष्ट हुन्छन् । सायं र प्रातः दुबै समयमा अध्ययन गर्ने अध्येता निष्पाप बन्दछ । सर्वत्र र सबै कालमा अध्ययन गर्ने अध्येता विघ्नरहित हुन्छ र त्यसले धर्म, अर्थ, काम

[illegible] पुरुषार्थ प्राप्त गर्दछ । यो अथर्वशीर्ष अशिष्यलाई दिनुहुँदैन । जसले मोहका कारण अशिष्यलाई दिनेछ त्यो महापापी हुनेछ । यसको एक हजार आवृत्ति गर्ने साधक आफूले चाहेका सबै विषय प्राप्त गर्न समर्थ हुनेछ ।

**अनेन गणपतिमभिषिञ्चति स वाग्मी भवति । चतुर्थ्यामनश्नन् जपति स विद्यावान्**
**भवति । इत्यथर्ववाक्यम् । ब्रह्माद्यावरणं विद्यान् न बिभेति कदाचनेति ।।१२।।**

जसले यस अथर्वशीर्षमन्त्रको पाठ गर्दै गणपतिको अभिषेक गर्दछ त्यो वाग्मी (विद्वान्) हुन्छ । जसले चतुर्थी तिथिमा निराहार रहेर जप गर्दछ त्यो आत्मविद्यासम्पन्न बन्दछ । यो अथर्वशीर्ष वेदको वचन हो । जसले ब्रह्मतत्त्वको आवरण जान्दछ उसलाई कहिले पनि कुनै तत्त्वबाट भय हुँदैन ।

**यो दूर्वाङ्कुरैर्यजति स वैश्रवणोपमो भवति । यो लाजैर्यजति स यशोवान् भवति,**
**स मेधावान् भवति । यो मोदकसहस्रेण यजति स वाञ्छितफलमवाप्नोति । यः**
**साज्यसमिद्भिर्यजति स सर्वं लभते स सर्वं लभते । अष्टौ ब्राह्मणान् सम्यग्**
**ग्राहयित्वा सूर्यवर्चस्वी भवति । सूर्यग्रहे महानद्यां प्रतिमासन्निधौ वा जप्त्वा**
**सिद्धमन्त्रोभवति। महाविघ्नात्प्रमुच्यते। महादोषात् प्रमुच्यते। महाप्रत्यवायात्**
**प्रमुच्यते । स सर्वविद्भवति । स सर्वविद्भवति । य एवं वेद । इत्युपनिषद् ।।१३।।**

जसले दूर्वाङ्कुर अर्पण गरी गणेशको अर्चना गर्दछ त्यो कुबेरसमान वैभवशाली बन्दछ । जसले लावा अर्पण गरी अर्चना गर्दछ त्यो यशस्वी र मेधावी बन्दछ । जसले एक हजार लड्डू समर्पण गरी अर्चना गर्दछ त्यसले चिताएका कामना पूर्ण हुन्छन्। जसले घिउले मिसिएका समिधा हवन गरी गणेशको आराधना गर्दछ त्यसले सबै कुरा पाउँछ, त्यसले सबै कुरा पाउँछ । जसले आठ जना ब्राह्मणलाई गणेशाथर्वशीर्ष राम्ररी पढाई ग्रहण गराउँछ त्यो सूर्यसमान तेजस्वी बन्दछ । जसले सूर्यग्रहणमा महानदीका तीरमा अथवा गणेशमूर्तिका सामु गणेशाथर्वशीर्ष पाठ गर्दछ त्यो सिद्धमन्त्र बन्दछ, त्यो सबै विघ्नहरूबाट मुक्त हुन्छ, त्यो ठूला अपराधबाट मुक्त हुन्छ, त्यो महान् पातकबाट मुक्त हुन्छ र त्यो सर्वज्ञ बन्दछ । जसले यस अथर्वशीर्षलाई राम्ररी जान्दछ त्यो पनि सर्वज्ञ बन्दछ ।

**इति गणपत्यथर्वशीर्षं सम्पूर्णम्**

**ॐ सह नाववतु सह नौ भुनक्तु सह वीर्यं करवावहै । तेजस्वि नावधीतमस्तु मा विद्विषावहै ।।**

हे परमात्मा ! तपाईले हामी दुबै शिष्य र आचार्यको एकसाथ रक्षा गर्नुहोस् । हे परमात्मा तपाईले हामी दुबै शिष्य र आचार्यलाई आफ्नो अभेदमय आनन्दभोग प्राप्त गराउनुहोस् । हे परमात्मा तपाईले हामी दुबैलाई निदिध्यासन, ध्यान र समाधिको सामर्थ्य प्रदान गर्नुहोस् । हामीद्वारा अध्ययन गरिएको विद्या तेजोमय बनोस् । हामी दुबै आचार्य र शिष्यका बीचमा कहिल्यै पनि द्वेष नहोस् । हाम्रा तीनै प्रकारका दुःख शान्त होऊन् ।

**ॐ भद्रं कर्णेभिः शृणुयाम देवा भद्रं पश्येमाक्षभिर्यजत्राः ।**
**स्थिरैरङ्गैस्तुष्टुवाँसस्तनूभिर्व्यशेम हि देवहितं यदायुः ।।**
**स्वस्ति न इन्द्रो वृद्धश्रवाः स्वस्ति नः पूषा विश्ववेदाः ।**
**स्वस्ति नस्ताक्ष्योऽरिष्टनेमिः स्वस्ति नो बृहस्पतिर्दधातु ।।**
**ॐ शान्तिः शान्तिः शान्तिः । हरिः ॐ ।।**

परिशिष्ट - तीन

# पूजाविधिसन्दर्भ

## ३.१ गणेशपार्थिवपूजनविधिः

पहेंलो माटो मुछेर गणेशको सुन्दर पार्थिवमूर्ति तयार गरी पूजा गर्नाले साधकले सबै प्रकारका सिद्धि प्राप्त गर्दछ । विशेष गरेर आफन्तहरूको बिछोड हुँदा तिनीहरूसँग भेट गर्न, ऋणबाट मुक्ति पाउन, कष्टहरूको निवारण गर्न र भगवान् गणेशको कृपा प्राप्त गर्न साधकहरूले शिवले पार्वतीलाई बताउनुभएको यस पार्थिवपूजनविधिबाट भगवान् श्रीगणेशको पूजा गर्नुपर्दछ ।

**पार्वत्युवाच**

दयानिधे गिरीन्द्र त्वं पितर्मे वद सत्वरम् । उपासनां गणेशस्य सर्वेशस्य जगद्गुरो ।।
यया शिवं समभ्येत्य शिवं प्राप्स्यामि शाश्वतम् । मर्त्यलोकेऽपि लोकानामुपकारो भविष्यति ।।

**हिमवानुवाच**

तव स्नेहवशाद् देवि ! रहस्यं परमं शुभम् । लोकानां चोपकाराय वक्ष्ये शृण्वेकचेतसा ।।
प्रत्यूषकाल उत्थाय नैर्ऋतीं दिशमाव्रजेत् । आच्छाद्य धरणीं पूर्वं तृणकाष्ठदलैरपि ।।
उर्वरां वर्जयेत्तिष्ठन्नुत्सर्पन्न च बुद्धिमान् । त्यक्त्वा मूत्रपुरीषे तु यथोक्तं शौचमाचरेत् ।।
दन्तजिह्वाविशुद्धिञ्च कृत्वा स्नातुं ततो व्रजेत् । नदीं तडागं वापी वा सरः कूपमथापि वा ।।
कृत्वा पूर्वं मलस्नानं मन्त्रस्नानं ततश्चरेत् । मृदा वा चन्दनेनापि तिलकं कुङ्कुमेन वा ।।
कुर्याद्धौते वाससी वा परिधाय शुभासने । उपविश्यैकचित्तस्तु सर्वं नित्यं समाप्य च ।।
मृत्तिकां सुन्दरां स्निग्धां क्षुद्रपाषाणवर्जिताम् । सुविशुद्धामवल्मीकां जलसिक्तां विमर्दयेत् ।।
कृत्वा चारुतरां मूर्तिं गणेशस्य शुभां स्वयम् । सर्वावयवसम्पूर्णां चतुर्भुजविराजिताम् ।।
परश्वादिस्वायुधानि दधतीं सुन्दरां घनाम् । स्थाप्य पीठे ततः पाणी प्रक्षाल्य मेलयेत् सुधीः ।।
पूजाद्रव्याणि सर्वाणि जलादीनि प्रयत्नतः । अष्टगन्धानक्षतांश्च रक्तपुष्पाणि गुग्गुलुम् ।।
त्रिपञ्चसप्तभिः पत्रैर्युतान् दूर्वाङ्कुरान् शुभान् । अष्टोत्तरशतं नीलान् श्वेतानानीय सुन्दरान् ।।
घृतदीपं तैलदीपं नैवेद्यं विविधं शुभम् । मोदकापूपलड्डूकान् पायसं शर्करायुतम् ।।
सूक्ष्मञ्च तन्दुलान्नञ्च व्यञ्जनानि बहूनि च । सचन्द्रपूगचूर्णाढ्यं खाद्यखादिरसंयुतम् ।।
एलालवङ्गसम्मिश्रं ताम्बूलं केसरान्वितम् । जव्वाम्रपनसादीनि द्राक्षारम्भाफलानि च ।।
तत्तदृतुभवानीशे नारिकेलानि चानयेत् । बहुप्रकारमार्तिक्यं काञ्चनीं दक्षिणां तथा ।।
एवं सम्भृतसम्भार एकान्तस्थलमास्थितः । चैलाजिने कुशमये आसने च कृतासनः ।।

भूतशुद्धिं प्रकुर्वीत प्राणानां स्थापनं तथा । दिग्बन्धपूर्वं देवाँश्च गणेशादीन् नमेत् पुरा ।।
अन्तर्बहिर्मातृकाश्च न्यसेदागममार्गतः । सन्निधानादिका मुद्रा दर्शयेद् गुरुमार्गतः ।
मन्त्रन्यासं ततः कृत्वा षडङ्गन्यासमेव च ।।

ध्यानम् - पूजाद्रव्याणि संशोध्य ततो ध्यायेद् गजाननम् । एकदन्तं शूर्पकर्णं गजवक्त्रं चतुर्भुजम् ।।
पाशाङ्कुशधरं देवं मोदकान् बिभ्रतं करैः। रक्तपुष्पमयीं मालां कण्ठे हस्ते परां शुभाम् ।।
भक्तानां वरदं सिद्धिबुद्धिभ्यां सेवितं सदा । सिद्धिबुद्धिप्रदं नृणां धर्मार्थकाममोक्षदम् ।
ब्रह्मरुद्रहरीन्द्राद्यैः संस्तुतं परमर्षिभिः ।।

आवाहनम् - आगच्छ जगदाधार सुरासुरवरार्चित । अनाथनाथ सर्वज्ञ गीर्वाणपरिपूजित ।।

आसनम् - स्वर्णसिंहासनं दिव्यं नानारत्नसमन्वितम् । समर्पितं मया देव तत्र त्वं समुपाविश ।।

पाद्यम् - देवदेवेश सर्वेश सर्वतीर्थाहृतं जलम् । पाद्यं गृहाण गणप ! गन्धपुष्पाक्षतैर्युतम् ।।

अर्घ्यम् - प्रवालमुक्ताफलपूगरत्नताम्बूलजाम्बूनदमष्टगन्धम् ।
पुष्पाक्षतायुक्तममोघशक्ते ! दत्तं मयाऽर्घ्यं सफलीकुरुष्व ।।

आचमनीयम्- गङ्गादिसर्वतीर्थेभ्यः प्रार्थितं तोयमुत्तमम् । कर्पूरैलालवङ्गादिवासितं स्वीकुरु प्रभो ।।

तैलम् - चम्पकाशोकबकुलमालतीमोगरादिभिः । वासितं स्निग्धताहेतु तैलं चारु प्रगृह्यताम् ।।

पयः - कामधेनुसमुद्भूतं सर्वेषां जीवनं परम् । पावनं यज्ञहेतुस्ते पयः स्नानार्थमर्पितम् ।।

दधिः - धेनुदुग्धसमुद्भूतं शुद्धं सर्वजनप्रियम् । मयाऽऽनीतं दधिवरं स्नानार्थं प्रतिगृह्यताम् ।।

घृतम् - नवनीतसमुत्पन्नं सर्वसन्तोषकारणम् । यज्ञाङ्गं देवताहारो घृतं स्नातुं समर्पितम् ।।

मधु - पुष्पसारघसम्भूतं सर्वतेजोविवर्धनम् । सर्वपुष्टिकरं देव ! मधु स्नानार्थमर्पितम् ।।

शर्करा - इक्षुसारसमुद्भूतां शर्करां सुमनोहराम् । मलापहारिणीं स्नातुं गृहाण त्वं मयाऽर्पिताम् ।।

गुडः - सर्वमाधुर्यसद्हेतुः स्वादुः सर्वप्रियङ्करः । पुष्टिकृत् स्नातुमानीत इक्षुसारभवो गुडः ।।

मधुपर्कः - कांस्ये कांस्येन पिहितो दधिमध्वाज्यपूरितः। मधुपर्को मयाऽऽनीतः पूजार्थं प्रतिगृह्यताम् ।।

स्नानीयम् - सर्वतीर्थाहृतं तोयं मया प्रार्थनया विभो ! । सुवासितं गृहाणेदं सम्यक् स्नातुं सुरेश्वर ।।

वस्त्रम् - रक्तवस्त्रयुगं देव ! लोकलज्जानिवारणम् । अनर्घ्यमतिसूक्ष्मञ्च गृहाणेदं मयार्पितम् ।।

ब्रह्मसूत्रम् - राजतं ब्रह्मसूत्रञ्च काञ्चनं रत्नसंयुक्तम् । भक्त्योपपादितं देव ! गृहाण परमेश्वर ।।।

आभूषणम् - अनेकरत्नयुक्तानि भूषणानि बहूनि च। तत्तदङ्गे काञ्चनानि योजयामि तवाज्ञया ।।

चन्दनम् - अष्टगन्धसमायुक्तं रक्तचन्दनमुत्तमम् । द्वादशाङ्गेषु ते देव ! लेपयामि कृपां कुरु ।।

तण्डुलाः - रक्तचन्दनसम्मिस्रास्तण्डुलास्तिलकोपरि । शोभायै सम्प्रदास्यामि गृहाण जगदीश्वर ।।

पुष्पाणि - पाटलं कर्णिकारञ्च बन्धूकं रक्तपङ्कजम् । मोगरं मालतीपुष्पं गृह्यतां परमेश्वर ।।

माल्यम् - नानापङ्कजपुष्पैश्च ग्रथितां पल्लवैरपि । बिल्वपत्रयुतां मालां गृहाण सुमनोहराम् ।।

धूपः - दशाङ्गं गुग्गुलं धूपं सर्वसौगन्ध्यकारकम् । सर्वपापक्षयकरं त्वं गृहाण मयाऽर्पितम् ।।

दीपः - सर्वज्ञ ! सर्वलोकेषु तमोनाशनमुत्तमम् । गृहाण मङ्गलं दीपं देवदेव ! नमोऽस्तु ते ।।

